जन आस्था
साप्ताहिक
JANA AASTHA National Weekly
www.janaaastha.com
वर्ष २९, अंक ३०, २०८० साल असोज १० गते बुधबार, नेपाल संबत् ११४३, September 27, 2023

# जर्नेल र एआइजीहरू अनि बेस्कन जंगिए

विशिष्ट श्रेणीका सुरक्षाकर्मीलाई सिपाहीसँग दाँज्न मिल्छ ? यसो भन्दै यतिबेला चारै वटा सुरक्षा निकायमा खैलाबैला मच्चिएको छ । त्यहाँका विशिष्ट श्रेणीले पाउँदै आएको रातो राहदानीको सुविधा सरकारले कटौती गरेपछि उनीहरू रुष्ट भएका छन् ।

राहदानी नियमावली, २०७७ ले सुरक्षा निकायका प्रमुखबाहेक अरु कसैलाई पनि कूटनीतिक पासपोर्ट नदिने प्रावधान राखेको कुरा बल्ल खुल्न आएको हो । नेपाल सरकारको प्रतिनिधित्व गरी विशेष काम र नियोगमा खटिई जाने सुब्बाले समेत त्यस्तो राहदानी पाउने व्यहोरा संशोधित नियमावलीमा घुसाइएको छ । यसैको मारमा नेपाल प्रहरी, सशस्त्र प्रहरी बल, नेपाली सेना र राष्ट्रिय अनुसन्धान विभागका प्रमुखबाहेक अन्य विशिष्टहरू परेका हुन् । फलतः अहिले विदेश जानुपर्दा उनीहरूले सरकारी निकायका शाखा अधिकृतदेखि सहसचिवले पाउनेजस्तै नीलो पासपोर्ट बोक्न थालेका छन् । एआइजी, मेजर जनरल र अतिरिक्त अनुसन्धान निर्देशक सिपाहीलाई दिइने पासपोर्टको स्तर एउटै भएपछि कतिपयले हीनताबोध गर्न थालेको पाइएको छ । श्रेणी विशिष्ट तर विदेश जाँदा देखाउने राहदानीचाहिँ शाखा अधिकृत तहको भएको भन्दै गृह, रक्षा, र परराष्ट्रमा हिजोआज दिनहुँजसो गलफत्ती चल्न थालेको स्रोतले बतायो । यसमा परराष्ट्र मन्त्रालयले कैफियत गरेको आरोप विशिष्टहरूले लगाएका छन् । वि.सं.२०७७ सालअघिसम्म सबैखाले विशिष्टलाई रातो राहदानी दिने प्रचलन थियो ।

कर्मचारी र महान्यायाधिवक्ता कार्यालयतर्फ सचिव तहका सबैले रातो राहदानी पाउने तर सुरक्षा फौजमा विभेद गरिने अवस्थाले बर्दीधारी हाकिमहरू कराउन जाँदा सम्बन्धित मन्त्रीहरूको टाउको दुखाउन थालेको छ । सशस्त्रका एआइजी सुशील श्रेष्ठ र नारायणबाबु थापा विदेश जाँदासम्म तिनले बोक्ने पासपोर्ट रातो नै थियो । तत्कालीन गृहमन्त्री रामबहादुर थापा (बादल), कानुन सचिव धनराज ज्ञवाली, आइजिपी ठाकुर ज्ञवाली, सचिव महेश्वर न्यौपानेलगायतले राहदानी नियमावली संशोधनको क्रममा रातो पासपोर्ट पाउने व्यवस्थालाई नै उलटपुलट बनाइदिएको कतिपयको गुनासो छ ।

यसबीच, काठमाडौं भ्यालीका एआइजी दीपक थापा नीलो पासपोर्ट बोकेर क्यानाडा गए । एआइजी मीरा चौधरी, किरण बज्राचार्य सन्दीप भण्डारी, सुदीप गिरी पनि नीलो पासपोर्ट लिएरै अमेरिका गएका थिए । जबकि परराष्ट्रले युएन मिशनमा जाने सिपाहीलाई समेत नीलो पासपोर्ट दिँदै आएको छ । 'हरेक सरकारी कार्यालयका विशिष्ट श्रेणीले रातो पासपोर्ट पाउने तर बाँकी ८ पेजमा

# दुई छिमेकीको प्रचारयुद्धमा जब च्यापिन्छ देश

**नेपाल र नेपालीका निम्ति ज्यानै फाल्न तयार भनिएका प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डले छिमेकी राष्ट्रहरूलाई समदूरीमा राख्दै राष्ट्रिय हितलाई अघि बढाउन सक्ने सुनौलो अवसर गुमाएका छन् । कुलमान घिसिङले राजदूतसँग परामर्शपश्चात् पठाएका ६ वटा प्रस्ताव थन्क्याएर विद्युत् व्यापारमा महत्वपूर्ण सम्झौता गर्ने भन्दै विभिन्न मञ्चमा बोलेका कुरा पूरा गर्न चीनको साताव्यापी भ्रमणमा दृढ इच्छाशक्तिको अभाव देखाएपछि यस्तो अवसर गुमेको हो ।**

अमूर्त भाषामा भारतीय नीतिको बर्खिलाप चीनसँग विकास निर्माणका कुनै पनि ठूला परियोजनामा सम्झौता गरे सत्ताबाट बाहिरिनुपर्ने बारम्बारको धम्कीपछि दाहाल यो अवसर चुकाउन बाध्य भएको दाबी उच्चस्तरीय स्रोतले गरेको छ । भ्रमणअघिसम्म दाहाल भारतसँग जस्तै चिनियाँ पक्षसँग विद्युत् व्यापार सम्झौता गर्न उत्साहित देखिन्थे । उनले भदौ १ गते विद्युत् प्राधिकरणको वार्षिकोत्सव र भरतपुरको सबस्टेशन उद्घाटनका बेला चीनसँग यस्तो सम्झौता गर्ने भन्दै आएका थिए ।

प्रचण्ड भारत भ्रमणमा गएका बेला भारतले १० वर्षभित्र नेपालबाट १० हजार मेगावाट विद्युत् खरिद गर्ने सम्झौता भएको थियो । यस्तै सम्झौता चीन पनि गर्न चाहन्थ्यो तर ऊसँग विद्युत् व्यापारको सम्झौता हुन नदिन भारतीयहरू प्रयासरत थिए, जुन सफल भएको बताइन्छ । जबकि नेपालसँग करिब डेढ लाख मेगावाट जलविद्युत् उत्पादन गर्न सक्ने क्षमता छ । दुवै छिमेकीसँग मिलेर ऊर्जा उत्पादन गरी बिक्री गर्ने हो भने आर्थिक समृद्धि हासिल गर्न निकै ठूलो सहयोग पुग्ने देखिन्छ । यसको श्रेय लिनबाट प्रधानमन्त्री चुकेको पाइएको छ । यही प्रयोजनका लागि नेपालस्थित भारतीय दूतावासले प्रधानमन्त्री प्रचण्ड चीनको हाङचौ पुगेलगत्तै दबाब बनाइराख्न 'भारतले नेपालका लागि यो गर्‍यो, त्यो गर्‍यो' भन्दै लगातार एक दिनमा १४ वटासम्म ट्वीट गरेको थियो । कूटनीतिक भाषामा यसलाई प्रमण्डमाथि भारतको अप्रत्यक्ष दबाबको रूपमा लिइएको छ । अरु बेला यति आक्रामक प्रचार युद्ध नछेड्ने भारतीय दूतावासले नेपालका प्रधानमन्त्री चीन भ्रमणमा भएकै बेला ट्वीटमाथि ट्वीट गरेपछि निकै अर्थपूर्ण मानिएको हो । यसलाई वैकल्पिक सरकार गठन गर्ने धम्कीका रूपमा बुझ्नेहरू प्रशस्तै छन् । केही महिनादेखि गठबन्धनको विरोध र सरकार परिवर्तनसम्बन्धी शेखर कोइरालालगायत कांग्रेस नेताको अभिव्यक्तिलाई यसै कडीको रूपमा लिइएको छ । यो र यस्तै धम्कीका कारण दबाब र तनावमा परेपछि प्रचण्डको मन मरेर धार्मिक यात्रातिर बढी केन्द्रित हुन पुगेको बताइन्छ । नेपाली पक्षको अन्यमनस्क भाव बुझेपछि एमसिसी पारित गर्ने बेला एकातर्फ अमेरिकालाई चिठी पठाउने, अर्कोतर्फ बानेश्वरस्थित संसद भवनअगाडि कार्यकर्तालाई ढुंगामुढा गर्न लगाउने दोग्ला नीति सम्झेर चिनियाँ पक्ष पनि चुप लागेको भ्रमण दलमा संलग्न उच्चस्तरीय एक कर्मचारीले बताए । स्रोतका अनुसार अरुण फर्स्टअन्तर्गत पर्ने किंमाथांकालगायत परियोजना सञ्चालन बाँकी ८ पेजमा

## समयको गतिलाई खै समात्न सकेको

*कम्युनिष्ट नेता उत्पादनको कारखाना मानिने मोहनविक्रम सिंहदेखि प्रचण्डका राजनीतिक गुरु मोहन वैद्य किरण हुँदै एक जमानाका ज्वाजल्यमान नेता सिपी मैनाली अहिले राष्ट्रिय राजनीतिमा फड्के किनाराको साक्षीजस्तै छन् । सिपीजस्तै झापा आन्दोलनका योजनाकार आरके मैनाली माओवादी, राजावादी हुँदै अहिले लगभग गुमनाम छन् । कुनै समय देशभर क्रान्तिको आवाज घन्काउने हैसियतका नारायणमान बिजुक्छेले भक्तपुरको एक नगरपालिकामा सीमित हुनुपरेको छ । समयको गतिलाई समात्न नसक्दा प्रभावशाली नेताहरू राजनीतिबाट कसरी ओझेलमा पर्छन् भन्ने प्रतिनिधि उदाहरण हुन्, सिंह, वैद्य मैनाली र बिजुक्छे ।*

*पछिल्लो समय नेपाल समाजवादी पार्टीका अध्यक्ष डा. बाबुराम भट्टराई पनि अस्तित्व रक्षाको संकटमा छन् । उमेर, अनुभव र लोकप्रियताले अझै पनि राष्ट्रिय राजनीतिमा सक्रिय भूमिकाको माग गरिएका पात्र थिए उनी । गणतन्त्रको सपना देखाएर आफ्नो यौटा आह्वानमा लाखौं युवालाई युद्धमा होम्न सक्ने बाबुराम माओवादी जनयुद्धका शीर्ष नेता पनि हुन् । तर, जनयुद्धकै जगमा प्राप्त उपलब्धि रक्षा गर्नुपर्ने बेला पार्टी छाडेर हिँडेपछि मूलधारको राजनीतिबाट क्रमशः किनारामा पर्दै गएका उनलाई अर्को* बाँकी ८ पेजमा

# प्रचण्ड बेइजिङ नपुग्दै नेपालीको प्राणान्त

प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्ड पुग्नु केही दिनअगाडि चीन घुम्न गएका एक जना व्यवसायीको बेइजिङमा हृदयाघातका कारण मृत्यु भएको छ । काठमाडौंका ६४ वर्षीय रमेशमान तुलाधरको असोज २ गते मंगलबार बेलुकी मृत्यु भएको हो । चीनका विभिन्न शहरमा आयोजना हुने प्रदर्शनीमा भाग लिन उनी साथीहरूसँगै गएका थिए । त्यता पुगेपछि ग्रेटवाल पनि हेरौं भन्दै बेइजिङ पुगेका उनी त्यहीं बिसर्जित भए ।

ग्रेटवाल घुमेर साँझ आफू बसेको होटलमा फर्किए । बेलुकीको खाना खाँदै गर्दा हृदयघात भएर ढलेका तुलाधरलाई साथीहरूले अस्पताल पुर्‍याएका थिए । तर अस्पतालले उनको मृत्यु भइसकेको जनायो । तुलाधरको मृत्यु हुँदा नेपाली दूतावासमा बुधवार आयोजना हुने संविधान दिवस समारोहको तयारी हुँदै थियो । तैपनि, बेलुका नै राजदूत विष्णुपुकार श्रेष्ठ अस्पताल पुगेर जानकारी लिए । तुलाधरको मृत्युपछि उनको शवलाई चाँडै नेपाल फर्काउने तयारी भएको थियो । तर चीनबाट शव ल्याउन निकै झन्झटिलो हुने र पठाउने कम्पनीले डेढ लाख युआन अर्थात् २६ लाख रूपैयाँभन्दा बढी पैसा माग गरेपछि परिवार शव नल्याउने बरु आफूहरू उतै गएर अन्तिम बाँकी ७ पेजमा

## चाइनिज तस्कर आउट, क्यान्सरपीडित चेलीलाई कस्टडी

# सरकारी वकिलले यसरी पो फेर्दा रहेछन् स्वाद

नेपाल प्रहरीको केन्द्रीय अनुसन्धान ब्यूरो (सिआइबी) ले भदौ २५ गते सरकारी वकिलको कार्यालयलाई ६० किलो सुन प्रकरणको वकिल जनकप्रसाद घिमिरेले रहस्यमय तरिकाबाट एक जना चिनियाँ प्रतिवादीको नाम काटेर क्यान्सरपीडित नेपाली चेलीलाई

> २६) कृष्ण बहादुर लिम्बुको छोरी, दिपेन्द्र राईको श्रीमती, कोशी प्रदेश, झापा जिल्ला गौरदह न.पा. वडा नं. १ घर भई हाल बागमती प्रदेश, का.जि. बुढानिलकण्ठ वडा नं. १० एकताबस्ती बस्ने वर्ष ३८ की (ना.प्र.नं. ६४१७१५६०२ झापा) रुकमिना सुब्वा.......................................१
>
> २९) चिनिया राहदानी नं.EE83335942 का बाहक हाल जिल्ला काठमाडौं का.म.न.पा.वडा नं.१६ मा बस्ने वर्ष ४३ को LUORONG GONGBU ........................................ फरार प्रतिवादी ।

फाइल बुझायो । ३०५ पृष्ठ मोटो प्रतिवेदनमा १० जना विदेशीसहित २९ जनालाई प्रतिवादी बनाइएको थियो । तर, भदौ ३१ गते सरकारी प्रतिवादी बनाइदिए । विमानस्थल भन्सार कार्यालयबाट समातिएकी क्यान्सरपीडित रुक्मिना सुब्बालाई १३ बाँकी ७ पेजमा

# किन यस्तो हुने गर्छ बारम्बार

घटनाहरूमा आधारित भई कुनै पनि विषयको छानबिन हुने र त्यसको निश्कर्षमा पुग्ने कुरा राज्यको दायित्वभित्र पर्छ । तर, घटनाहरूलाई राजनीतिक आधारमा बुझियो र त्यसैअनुसारको प्रतिशोध साँधियो भने केसम्म हुन्छ भन्ने कुरा देशमा देखिएका पछिल्ला केही घटनामा पाइन्छन् ।

ललिता निवास जग्गा घोटाला अनियमिततासँग सम्बन्धित छ । तर, उक्त प्रकरणको निशाना कता सोझियो सोझियो । फलस्वरुप, न मुद्दा निश्कर्षमा पुग्यो, न त अनुसन्धानको महत्त्वपूर्ण पाटो नै टुंगोमा पुग्न सक्यो । सुन तस्करीमा त्यस्तै भयो । यसअघिको ३३ किलो सुन तस्करीमा चुडामणि उप्रेती (गोरे) थुनिएका छन् । तर, उनको मुद्दा सुन हैन, सनम शाक्यको हत्यामा लगेर टुंग्याइएको छ । अर्थात्, प्रमाणबिना नै थुप्रै मानिसलाई मुद्दा चलाउँदा विषयान्तर गरेर केही व्यक्ति जेल परेका छन् । देशमा स्थायी सुन तस्करी रोक्न के-के व्यवस्था हुनुपर्छ भन्नका लागि गरिने छानबिनमा कुनै समय र सीमा चाहिँदैन । जहिले गरे पनि हुन्छ । तर, एक विषयले एक समयमा चर्को रुप लिने र पछि त्यत्तिकै फासफुस हुने गरेको पाइन्छ । विमानस्थल भन्सारलाई छलेर विभिन्न सामानभित्र हाली ल्याइएको सुन बरामद हुनु र 'ठूला माछा' पनि समातिनु, नेपालको इतिहासमा पहिला यस्तो भएकै थिएन । जुन घटनामा कारखानासमेत फेला परेको छ । अहिले तस्करीको त्यो साम्राज्य ढल्यो भनेझैं चर्चा गरिँदैछ । तर, यसको रोकथाम कसरी गर्ने ? भविष्यमा यस्तो हुन बाँकी ८ पेजमा

# हिमालतिर विदेशीका पछि लाग्नेको हुल

हिमाल आरोहणका लागि नेपाल आउने पर्यटकको संख्या घटेको घट्यै छ, तर दशौंको मुखमा लियाजो अफिसर (सम्पर्क अधिकृत) बनेर जानका लागि तालिममा पठाइदिनुपर्‍यो भन्ने कर्मचारीको संख्याचाहिँ बढेको बढ्यै छ ! अघिल्लो आर्थिक वर्ष मनास्लु हिमाल आरोहण गर्न जाने टोली ४१ थिए, यस वर्ष १५ घटेर २६ मा खुम्चिएको छ । यससँगै धौलागिरी, अन्नपूर्ण, पुमोरी, चोओयूलगायत हिमाल आरोहणका लागि अनुमति लिने पर्यटकको संख्यासमेत ओरालो लागेको पर्यटन विभागले जनाएको छ ।

अस्ति २६ बाट ३१ सेप्टेम्बरसम्म मनास्लु हिमाल आरोहणका लागि २६ वटा टिम त्यसतर्फ लम्किसकेका छन् । २३६ पुरुषसहित ६५ महिलाको टोली ३१ सेप्टेम्बरमा मनास्लु हिमाल आरोहण गरेर फर्किने कार्यक्रम छ । यसरी आउनेमा अष्ट्रेलियाका २ महिलासहित १०, क्यानाडाका १ महिलासहित १४, चीनबाट १८ महिलासहित ६७, फ्रान्सका २ महिलासहित २०, जर्मनीका २०, भारतबाट २४, इरान १३, इटाली ८, जापानका २३, नेपालका ४, पाकिस्तानका ५ छन् । हिमाल आरोहणको मौसम शुरु भएसँगै सम्पर्क अधिकृत बनेर अघिल्लो वर्ष ४१ जना गएकोमा यसपटक एक/दुई दिन हिमाल आरोहणको रोमाञ्चक अवसर पाइने, तीनदेखि साढे तीन लाख रुपैयाँ हात बाँकी ८ पेजमा

# नेपाल र चीनबीच विश्वास टुटेकै हो त !

शनिबार उन्नाइसौं एशियाली खेलकुदको तामझाम बडो गज्जबसँग हुँदै थियो । औपचारिक उद्घाटन समारोह शुरु हुने हतारो थियो । त्यही मेसोमा प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्ड र चिनियाँ राष्ट्रपति सि चिनफिङको भेट भयो । साँझको पाँच बज्न लाग्दा चच्याङ प्रान्तको राजधानी हाङचौमा डेलिगेसन तहमा उक्त भेट भएको हो । सि आफ्ना परराष्ट्रमन्त्री वाङ् यीलगायत सँगै भेटवार्तामा सहभागी थिए । प्रचण्ड स्वकीय सचिवसमेत रहेकी छोरी गंगा दाहाललाई हरेक उच्चस्तरीय भेटवार्तामा दायाँपट्टि राखेर परराष्ट्रमन्त्री, सल्लाहकार, मुख्यसचिव, सचिव लगायतसँग बसेका थिए । ताङछी एन्सिएन्ट टाउनस्थित स्टेट गेष्टहाउसमा भएको भेटमा सिले चिनियाँ भाषामा आफ्ना कुरा राख्न थाले । न्यूयोर्कबाट हङकङको १७ घण्टे उडान र त्यहाँबाट हाङचाउ यात्रा गरेर आएका प्रधानमन्त्री थकित देखिन्थे । सिसँग हात मिलाउँदाको कस्मेटिक मुस्कानबाहेक अरु अनुहारको कान्ति देखिएन । संबोधन पनि उत्साहित थिएन । अंग्रेजी भाषामा सिको तारिफ गरे । यी दूरदर्शी नेता भएको र नेपाल चीनबीच रणनीतिक सम्बन्ध भएको पनि बताए ।

प्रचण्डले नेपालीमा संबोधन गर्न सक्ने सम्भावना थियो । त्यहाँका आधा दर्जन विश्वविद्यालयमा नेपाली बाँकी ८ पेजमा

# त्यो फोन र त्यसपछिको तनाव

प्रधानमन्त्रीले विश्वास गरेको वकिल महान्यायाधिवक्ता हुने चलनै हो । तर, एकपछि अर्को गर्दै युवाहरूलाई त्यही भऱ्याङमार्फत सर्वोच्चमा छिराएर भावी प्रधानन्यायाधीशको लाइनमा उभ्याउने खेती मौलाएको छ ।

अहिलेका महान्यायाधिवक्ता डा.दिनमणि पोखरेललाई कांग्रेस सभापति शेरबहादुर देउवाकै सामु प्रमले अमेरिका र चीन जानुअघि न्यायपरिषद् बैठक चल्दाचल्दै फोन गरेर सर्वोच्चमा लाने निर्णय गराउन चाहनुभएको थियो । त्यसमाथि न्यायपरिषद् सदस्य रामप्रसाद श्रेष्ठसमेत दिनमणिबाहेक अरुको नाम आएमा सही नै नगर्ने भन्दै कात्तिक ११ गतेसम्मका लागि असोज पहिलो हप्ता अमेरिकातिर हान्निएका छन् । कांग्रेसी कोटा भन्दै शेखर कोइरालाले बारका पूर्व महासचिव सुनिल पोखरेल बाँकी ८ पेजमा

# अचम्मैसित सहसचिव अलप

नेपाल सरकारका एक सहसचिव बिना जानकारी १६० दिनदेखि सम्पर्क विहीन भएका छन् । कृषि तथा पशुपन्छी विकास मन्त्रालयमा कार्यरत प्राविधिकतर्फका सहसचिव डा.कमलराज गैरे आफूखुशी गैरहाजिर भएका हुन् । गत वैशाख २ गतेदेखि उनी कार्यालयमा छैनन् । पछिल्लो समय भुटानस्थित पुनाख डेजोङ भन्ने ठाउँमा खिचेको फोटो फेसबुकमार्फत सार्वजनिक गरेका थिए । सोही फोटोका आधारमा गैरे विदेशमा रहेको तथ्य फेला परेको हो । बिदा स्वीकृत नगराई चार महिनादेखि अनुपस्थित भएपछि मन्त्रालयले कारबाही प्रक्रिया अघि बाँकी ८ पेजमा

# श्रीमान्लाई समेत झस्काउने अपराध

बेञ्चबाटै आदेश आयो, 'यो मान्छे अलिक खतरनाक नै छ, हिरासतमा राख्दा अलिक होश पुर्‍याउनुहोला !'

गैरीगाउँ, तीनकुनेमा भएको सामूहिक हत्याकाण्डका आरोपी सञ्जय भण्डारीका चालामाला बुझेपछि काठमाडौं जिल्ला अदालतका न्यायाधीश नै यसरी झस्किए । भदौ २९ गते त्यहाँको दिव्य स:मिलमा धारिलो हतियार प्रयोग गरी विशाल राईसहित चार जनाको सामूहिक हत्यामा संलग्न सिन्धुपाल्चोक, बाह्रबिसेका सञ्जय फरक शारीरिक क्षमता (बोल्न नसक्ने) का व्यक्ति हुन् । तर, बोल्न सक्ने र 'टाठाबाठा' भनिनेहरूको भन्दा पनि अब्बल क्षमताको हुँदा प्रहरीदेखि न्यायाधीशसम्म त्राहिमाम छन् ।

उनले त्यसदिन एउटा मान्छे मारेपछि भाग्न पनि सक्थे तर अरु निर्दोषलाई पनि छप्काए । इजलासमा सोधियो, 'किन त्यस्तो गरेको ?' उनले भने, 'पुलिसलाई भन्छु ।' उनले मारेका मान्छे बोरा र काठले छोपछाप पारेर लुकाए, शौचालयको धारानिर लगेर खुकुरीमा लत्पतिएको रगत पखाले । उनी अपराध गर्ने मात्रै हैन, अपराधको व्यवस्थापनमा पनि उत्तिकै बाँकी ८ पेजमा

# मन्त्री र मन्त्राणी मिलेरै मिचमाच

वर्गीय राजनीति छाडेर जातीय मोह जाग्दा प्रभावशाली भूमिकाबाट खुम्चिँदै गएका शिक्षामन्त्री अशोक राईमाथि सरकारी जग्गा हडपेको आरोप लागेको छ ।

राईले शंखमूलमा एउटा निजी विद्यालय सञ्चालन गर्न झण्डै आधा रोपनी सरकारी जग्गा हडपेको तथ्य र प्रमाण उपलब्ध गराएको छ, काठमाडौं महानगरपालिकाले । वडा नम्बर- १० शंखमूलमा छ, उनको स्वप्न बाटिका (एसडी) विद्यालय । फाउण्डेसनमार्फत सञ्चालित उक्त विद्यालय व्यवस्थापन बाँकी ८ पेजमा

## नोट अफ डिसेन्ट



राजेश मिश्र

# 'खवरदार, ठूलो षड्यन्त्र हुँदै छ'

यो ०४७ सालको कुरा हो । पञ्चायती व्यवस्था ढलेको थियो । दरबारियाहरू मुखमा फिटकरी चपाउँदै थिए । नेपाली राजनीतिलाई दिशा निर्देश दिन नयाँ संविधान बनाउने चटारो थियो । कम्युनिष्ट घटकबाट निर्मल लामा पनि थिए एक जना मस्यौदाकार । उनले अचानक बाहिर आएर बोलिदिए, 'ठूलो षड्यन्त्र हुँदै छ । जनताले लडेर ल्याएको उपलब्धिलाई नामेट गर्ने काम हुँदै छ ।'

संविधान समयमा ल्याउने जिम्मेवारी तत्कालीन अन्तरिम प्रधानमन्त्री कृष्णप्रसाद भट्टराईको थियो । न्यायाधीश विश्वनाथ उपाध्याय संविधान सुझाव (सुधार होइन) आयोगका अध्यक्ष थिए । लेटर प्रेसबाट अफसेट प्रविधिमा फड्को मार्न थालेको नेपाली छापामाध्यमले निर्मल लामाको वक्तव्यलाई रातारात आजको भाषामा 'भाइरल' बनायो । भएको केही रहेनछ । कांग्रेसबाट खटिएका दमननाथ ढुंगानाले भनेछन्, 'संविधानको प्रस्तावनामा जनताको अधिकार राजाको अनुग्रहमा निःसृत हुनुपर्छ । बेलायतमा पनि 'गड सेभ द क्विन' भन्ने कुरा प्रचलित छ ।' निर्मल लामा यो कुरा मान्दै नमान्ने । उनले भने रे, 'हामी अमेरिकाको जस्तो 'वी द पिपुल, बाई द पिपुल, फर द पिपुल' मा किन नजाने ?'

यो खलबलको कारण त्यतिबेला संविधानको प्रस्तावना लेख्ने काम नै थातीमा राखियो । अरु कुरा लेखिँदै गए । यथार्थमा मुख्य कुरा लेख्न रोकियो । पश्चिमा मुलुकमा जहाँ संसदीय व्यवस्था थियो, त्यहाँका संविधान हेरेर दुरुस्त सारिँदै गए । आयोगका अध्यक्ष विश्वनाथ उपाध्याय हक्की मान्छे थिए । उनले धेरै अरु कुरामा हस्तक्षेप गर्न सकेनन् । तर, निर्मल लामालाई प्रेस सम्मेलन गरेर आफू अति उत्साही भएकोमा क्षमा माग्न लगाए । अख्तियार दुरुपयोग अनुसन्धान आयोगका 'हाई प्रोफाइल' प्रमुख सूर्यनाथ उपाध्याय त्यतिबेला संविधान सुझाव आयोगका सदस्य सचिव थिए । उनको डिल्लीबजार घट्टेकुलोमा एक सामान्य घर थियो । अहिले बूढानीलकण्ठमा बंगला छ । साँझ सात बजेतिर उनको घरमा छापामार शैलीमा पुगेर सोधेँ, 'सर, बाहिर जे आएको छ के यो कुरा सत्य हो ? समस्या के हो ?' उनले भने, 'हेर्नुस्, संविधानको प्रस्तावना अहिलेसम्म लेख्ने कुरा भएकै छैन । के लेखिन्छ, त्यो बाँकी ८ पेजमा

# चीनमा प्रधानमन्त्रीका कामहरूको चिरफार

यतिबेला प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्ड चीन भ्रमणमै छन् । हाङचौमा आयोजित १९औं एशियाली खेलकुद उद्घाटन समारोहमा सहभागी भएर बेइजिङ पुगी समकक्षी लि छ्याङसँग दुईपक्षीय वार्ता गरेका उनको भ्रमणको औपचारिक कार्यक्रम यति मात्र हो । यसबाहेक उनी अहिले तीर्थयात्रामा छन् । बडो फुर्सद र मस्त पारामा छिमेकी देशका प्रधानमन्त्रीले यसरी बिदा मनाइरहँदा चिनियाँहरू भने दंग परेका छन् ।

अमेरिकाबाट सोझै चच्याङ प्रान्तको सदरमुकाममा ओर्लिएका प्रचण्डले सोही दिन चिनियाँ राष्ट्रपति सि चिनफिङसँग भेट गरेका थिए । ८ गते सोमबार चिनियाँ जनमुक्ति सेनाबाट सलामी ग्रहण गर्दै आफ्नो भ्रमणलाई राजकीय बनाए । स्मरण रहोस्, उनले प्रधानमन्त्रीका रूपमा तेस्रोपटक चीन आउँदा मात्र यसरी र अझ २-२ ठाउँमा 'गार्ड अफ अनर' ग्रहण गर्न पाएका हुन् । सन् २००८ मा पहिलोपटक प्रधानमन्त्री भएर २९ औं गृष्मकालीन ओलम्पिक खेलकुदको समापन समारोहमा भाग लिई फर्कंदा त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमै आफ्नो यो भ्रमण अनौपचारिक र अराजनीतिक रहेको भनी घोषणा गरेपछि चीन चिढिएको थियो ।

दोस्रोपटक प्रधानमन्त्री हुँदा सन् २०१७ को मार्चमा दक्षिणी टापु हाइनानको बोआओमा हरेक वर्ष आयोजना हुने फोरममा बोलाइएको थियो । उक्त समयमा उनलाई बेइजिङमा स्वागत गर्ने कुरै थिएन । तत्कालीन राजदूत लीलामणि पौड्याललाई पनि प्रचण्डलाई बेइजिङ टेकाउन ठूलै पापड पेल्नुपरेको थियो । उक्त समयमा बेइजिङ त गए तर उक्त भ्रमण औपचारिक हुन सकेन । तत्कालीन राष्ट्रपति रामवरण यादवलाई पनि बोआओ फोरमबाट बेइजिङ लगिएको थिएन । यसपटक आउँदाको मुख्य उपलब्धि नै राजकीय बन्नु मात्र रह्यो । उनले आफैंले घोषणा गरेको कतिपय महत्वपूर्ण मुद्दामा प्रवेश गर्नै चाहेनन् ।

**प्रशारण लाइन कि एक धर्को लगौंटी**

भ्रमणको तयारीका क्रममा प्रचण्डले नेपाली बिजुली चीनमा बेच्नका लागि क्रसबोर्डर ट्रान्समिसन लाइन निर्माणमा सम्झौता गर्ने भनेर भाषण नै गरेका थिए । टिमुरे केरुङ २४० केभी लाइनको ट्रान्समिसन लाइन चीनले निर्माण गरिदिने विद्युत् प्राधिकरणका प्रबन्ध निर्देशक कुलमान घिसिङको घोषणा थियो । दुई हप्ताअगाडि मात्र गरिएको घोषणाअनुसार सम्झौता गर्नका लागि चीन पनि तयारी अवस्थामा थियो । यही एउटा विषयमा सम्झौता भएको भए प्रचण्डको समग्र चीन भ्रमण औसतदेखि केही माथि रहन सक्थ्यो । निर्माणमा लगानी गर्ने भनेर चीनले हरियो झण्डासमेत देखाइसकेको थियो । प्रचण्डले भारत भ्रमणताका सबै उतैको एजेण्डामा ल्याप्चे लगाएर देशलाई घात गरेको भनी चर्को आलोचना भइरहेका बेला टिमुरे केरुङ ट्रान्समिसन लाइन निर्माणको सम्झौता चीनसँग गरेर केही हदसम्म जोगिएका छन् ।

मंगलबार बिहान जारी भएको संयुक्त वक्तव्यमा 'जिलोङ/केरुङ-रसुवागढी-चिलिमे २२० केभी क्रस बोर्डर पावर ट्रान्समिसन लाइनको निर्माण चाँडो शुरु गरिने' भन्नेसम्म उल्लेख छ । पाँच वर्षअघि नै यससम्बन्धी अध्ययन शुरु भए पनि बाँकी ७ पेजमा

# यो कुरा रहेसम्म बन्दैन मुलुक

देशमा अहिले मिश्रित निर्वाचन प्रणाली छ । पहिलो हुने निर्वाचित हुने (प्रत्यक्ष) प्रणाली र समानुपातिक प्रतिनिधित्वको प्रणाली नै मिश्रित निर्वाचन प्रणाली हो । नयाँ संविधान जारी भएसँगै यस्तो प्रणाली अवलम्बन गर्न सहमत भएका राजनीतिक दलहरू पछिल्लो समय क्रमशः अब यसबाट पार नलाग्ने भन्नेमा पुगेका छन् ।

सबै नीतिको मूल नीति हो राजनीति । राजनीतिलाई जनतासँग जोड्ने माध्यम हो निर्वाचन । तर, चुनावी प्रणालीकै कारण राजनीतिक अस्थिरता बढेपछि निर्वाचन आयोगलगायत सरोकारवाला पनि प्रणाली परिवर्तनको बहसमा छन् । अहिलेको प्रणालीअन्तर्गत भएका दुइटा निर्वाचन हेर्दा प्रदेश र संघमा कुनै पनि दलको बहुमत आउने देखिएन । समानुपातिकतर्फ कम्तीमा ४५ प्रतिशत मत नहुने दलले प्रत्यक्षमा जति सिट जिते पनि एकल बाँकी ८ पेजमा

आस्था प्रकाशन प्रा. लि.को निमित्त

| | | |
|---|---|---|
| सम्पादक | : | किशोर श्रेष्ठ |
| प्रबन्ध सम्पादक | : | राजेन्द्र स्थापित |
| कार्यकारी सम्पादक | : | विश्वमणि सुवेदी |
| कार्यालय | : | सानेपा, ठाडोढुंगा, ललितपुर |
| | | फोन : ५५४१५५२, ५५२२५५१ |
| इमेल | : | jana . aastha@gmail . com |
| वेबसाइट | : | www . janaaastha . com |
| मुद्रण | : | सुजल अफसेट प्रेस, बागबजार, फोन : ४२३३४५९ |

# वामपन्थीलाई कति आउँछ है गाली बक्न !

दिनेश रायमाझी

कसैकसैले भन्ने गर्छन्- आची पुछेर फालेको काठको टुक्रा पनि जाडो लाग्दा बालेर ताप्न काम लाग्छ। हाम्रा बा भन्ने गर्नुहुन्थ्यो- सानो ढुंगा पनि ऐन-मौकामा असाध्यै काम लाग्छ। राति जब भुस्याहा कुकुरले भुक्दै घेर्छन् त्यो बेला ज्यान जोगाउने भनेको त्यही बाटोमा रहेको ढुंगाले हो। हुन त राजनीतिमा स्थायी मित्र नहुने भाष्य उहिल्यै निर्माण गरिएको थियो, जुन अध्यापि कायमै छ। तैपनि, राजनीतिक नैतिकतालाई ध्यानमा राख्दा यो भाष्य गलत हो र गलत नै रहनेछ। कतिपयले सहमतिअनुसारको संविधान बनेकाले अब मित्र वा पराइको राजनीति गरिनुहुन्न भन्ने दलिल पनि पेश गरेको देखिन्छ। निर्वाचन प्रणालीका हिसाबले चुनावमा कसैलाई पनि बहुमत प्राप्त नहुने अवस्थामा सहमतिमै राजनीतिलाई अघि बढाउनुपर्ने बाध्यता छ भनिन्छ। तर के यस्तो सहमतिले देशलाई संविधानको मर्मअनुसार अघि बढ्न दिन्छ त ! यसलाई सरल भाषामा यसरी प्रस्तुत गर्न सकिन्छ- काग कागसँगै र बकुल्ला बकुल्लासँगै यात्रा गर्दा बढी सहज हुन्छ। हामीकहाँ अहिले मुख्यत: तीन थरी राजनीतिक विचारधारा देखिन्छन्। पहिलो वामपन्थी, दोस्रो मध्यपन्थी पुँजीवादी र तेस्रो दक्षिणपन्थी राजावादी। यी तीनैथरी मिलेर या यिनीहरूको सहमतिमा संविधानको भावनामुताविक देश समाजवादको बाटोमा हिँड्छ भनेर मान्नु अपरिपक्वता हो, यस्तो हुँदैन।

वामपन्थीमा एउटा डरलाग्दो रोग रहेछ- मबाहेकका अरु सबै गलत हुन् भन्ने सोच। पुष्पलाललाई गद्दार भन्ने यिनै वामपन्थी थिए। प्रचण्ड, माधव र केपीलाई देवता र दानव बनाउने पनि यिनीहरू नै हुन्। भाषामा अँगार खाएर अँगारै ओकल्छन् वामपन्थीहरू। कांग्रेसलाई हामी बुर्जुवा पार्टी मान्छौं। यस्तो पार्टीले पनि दानवीकरण गर्न नसकेको अथवा भनौं नगरेको वामपन्थी नेताहरूलाई यिनीहरू आफैले गर्न भ्याए। कांग्रेसले आफ्नो नेतृत्वलाई कहिल्यै पनि अपमानित गरेको सुनिएन। कृष्णप्रसाद भट्टराईले रुँदै संसदमा भाषण गर्दै पदबाट राजीनामा दिए तर गिरिजालाई गाली गरेनन्। देउवाले पार्टी फुटाएर प्रजातन्त्रलाई दरबारमा भेटी चढाए तर गिरिजाले गालीगलौजको बाटो लिएनन्। तर, वामपन्थीको कुरै नगरौं। कसलाई के के भनेर गाली गरे, अपमान गरे, बदनाम गरे भनेर लेख्ने हो भने सानोतिनो किताब नै बन्छ। ओलीलाई संविधानविरोधी कांग्रेसले भनेको हो ? प्रचण्डलाई हत्यारा कांग्रेसले भनेको हो ? महाकाली सन्धिमा राष्ट्रघात गरे भनेर राप्रपाले भनेको हो ? जवाफ हुन्छ- होइन। यो सबै काम वामपन्थीले नै गरेका हुन्।

माथि भनिएजस्तो सुनसान रातमा भुस्याहा कुकुरले लखेट्दा बाटोको ढुंगा काम लागेजस्तो वामपन्थीलाई समाजवादको बाटोमा अघि बढ्न यिनै वामपन्थी नै काम लाग्छन्। भोलि दक्षिणपन्थीले जिते भने उनीहरूले झापामा ओलीलाई समर्थन गरेर संसदमा पठाउने छैनन्

**ओलीलाई संविधानविरोधी कांग्रेसले भनेको हो ? प्रचण्डलाई हत्यारा कांग्रेसले भनेको हो ? महाकाली सन्धिमा राष्ट्रघात गरे भनेर राप्रपाले भनेको हो ?**

बरु हतकडी लगाएर जेल पठाउनेछन्। परिस्थिति अनुकूल भयो र चुनावमा बहुमत ल्याउन सक्यो भने कांग्रेसले पनि प्रचण्डलाई गोरखाबाट जिताउने छैन बरु हत्या, हिंसा र घोटालाको आरोपमा जेल नै हाल्नेछ। त्यसकारण राता मान्छेहरू एक हुने भनेको राताहरूसँगै हो। रातारात मिलेर अरुसँग प्रतिस्पर्धा गर्ने हो। यति कुरा हामीले बुझ्छौं तर ओली, माधव र प्रचण्डले किन बुझ्दैनन् कुन्नि ?

राजनीतिमा सबै सम्बन्ध अस्थायी हुन्छन् भन्नु सत्तामुखी कुरा हो। सत्तामा जाने र सत्ताभोग गर्ने जुक्ति हो। यस्तो भ्रमबाट कम्तीमा पनि हामी मुक्त हुन जरुरी छ। मार्क्सवाद र पुँजीवादबीचको सम्बन्ध स्थायी हो भने दलविशेषको सम्बन्ध कसरी अस्थायी हुन सक्छ ? राजनीतिमा वैमनष्यता/दुश्मनी पो नहुने भनेको हो। सत्तामा जानलाई जोसुकैसंग घाँटी जोड्ने भनेको होइन। कांग्रेस वा रास्वपासँग सौहार्द्रतापूर्वक संवाद र व्यवहार हुन सक्छ भने वामपन्थी वामपन्थीबीच पनि हुनुपर्छ। प्रचण्डले ओलीलाई वा ओलीले माधवलाई अथवा आहुतिले प्रचण्डलाई दानव बनाउने होइन। कम्तीमा पनि सार्वजनिक मञ्चबाट एकअर्कालाई दानवीकरण गर्न छाड्नुपर्छ। यो गणतान्त्रिक व्यवस्था ल्याउनमा राप्रपाको कुनै योगदान छैन। अझ अघि बढेर भन्दा यिनैका विरुद्ध लडेर गणतन्त्र आएको हो। सिद्धान्तत: जर्मनीमा फाँसीवादीलाई प्रतिबन्ध लगाएजस्तै यो दललाई पनि राजनीतिक प्रतिबन्ध लगाउनुपर्ने थियो। तर, त्यस्तो गरिएन। आज यिनीहरूले यसैको फाइदा उठाउँदै अर्थात् संविधानले दिएको स्वतन्त्रताको फाइदा उठाउँदै संसदभित्रै गणतन्त्रको विरोध गरिरहेका छन् र गणतन्त्र ल्याउन नेतृत्व गरेका मानिसलाई हत्यारा भनिरहेका छन्। यस्तो किन सम्भव भयो भने वामपन्थीले नै यस्तो वातावरण बनाउने काम गरे। नेकपा(नेकपा) नफुटेको भए गणतन्त्रलाई गाली गर्नेहरू आज संसदमा पुग्ने नै थिएनन्। यो सबै कसले बिगारेको हो, यस्तो अवस्था आउनुमा को जिम्मेवार छ भन्दा फुटपरस्तवादी वामपन्थी नै जिम्मेवार छन्।

अन्त्यमा, अहिले ठूलो वामपन्थी दल बावादले ग्रस्त छ। अब यो बावाद राष्ट्रिय झण्डा, वीरताका गाथा र रुद्राक्षका मालालाई वामपन्थमा छिराएर आगामी चुनाव जित्ने दाउ खेल्न खोज्दै छ। यहींनिर प्रश्न छ- के यस दलका आम सदस्यहरूको भूमिका र क्षमता यसैमा ताली पिट्ने र यसैलाई बोकेर हिँड्ने तहसम्म मात्रै हो कि त्योभन्दा परसम्म पनि छ ? यस दलका आम सदस्यले आफ्नो राजनीतिक तथा वैचारिक भूमिकाको दायरालाई बढाउन नसक्ने हो भने यो ठूलो दललाई बिसर्जन हुनबाट रोक्न सकिने छैन। किनभने अबको चुनावका मतदाता भनेका इन्टरनेटमा विकास र समृद्धि पत्ता लाउने वर्ग हुन् जसलाई ओलीले एउटै कपडाले हप्तौं बिताएको कथासँग कुनै रुचि नै छैन।

## सम्पादकीय

# सबैतिर नलादे हुने नि सैनिक सर्वोच्चता

कुनै पनि निकाय गठनको खास खास उद्देश्य र क्षेत्राधिकार हुन्छन्। तर, जब यस्ता उद्देश्य र क्षेत्राधिकार मिचिन्छ त्यसले अराजकता र दण्डहीनतालाई प्रश्रय दिनुका साथै कानुनी राज र विधिको शासनकै उपहास गरिदिन्छ। सुन प्रकरणमा संसद अवरुद्ध गरिएपछि सरकार र प्रमुख प्रतिपक्ष एमालेबीच आयोग गठन गर्ने उहिल्यै सहमति भएको हो। राजश्व छली र भ्रष्टाचारजस्ता विषयमा आयोग गठन गर्ने माग आफैंमा अनौठो हो किनभने यी कार्यसम्पादन गर्नका निम्ति राज्यका अरु निकाय कानुनद्वारा पहिलेदेखि नै स्थापित छन्। तर, तिनलाई कानुन बनाउने विधायकहरूले ह्याकुलाले मिच्नु शुभ संकेत पक्कै होइन। यो कार्यपालिकामाथि व्यवस्थापिकाको ठाडै चुनौती हो। राज्यको निकाय वा विषयविज्ञ संस्थाले सम्पन्न गर्ने कार्य जब राजनीतिज्ञ र अव्यावसायिक मान्छेलाई जिम्मा लगाइन्छ, तब भन्नैपर्छ, हातमा बन्दुक खेलाउने सिपाहीले औषधि बिक्रेताको काम थाल्नु कत्तिको सुहाउला ? शक्तिशाली सरकार वा संसद जसले जे नियम बनाए पनि वा जे गरे पनि त्यो सही ठहरिने अवस्था सिर्जना हुनु कसैको निम्ति पनि हितकर हुँदैन।

राजश्व र सिआईबीले फाइल र मुद्दा बुझाइसकेपछि हङकङबाट ब्रेक सुमा लुकाएर ल्याएको ६१ केजी र इलेक्ट्रिक सिगरेट (भेप) मा राखेर भित्र्याइएको करिब ९ केजी सुन तस्करीको घटनालाई नयाँ शिराबाट अनुसन्धान थाल्ने गरी क्षेत्राधिकार (टिओआर टर्म्स अफ रिफरेन्स) प्रस्ताव गरिएपछि यसले आयोगको उद्देश्य र कार्यक्षेत्रका विषयमै सवाल उठ्न थालेको छ। आयोग गठनको सहमति भएर सदन त खुल्यो तर यसको क्षेत्राधिकार र कार्यसम्पादन गर्ने अधिकारको विषयमा अहिले देखिएको मतभेदका कारण सोको गठन पनि हुन सकेको छैन। सबै कुरा ठीकठाक नै चलेको भए असोज ५ गतेभित्रै आयोग गठन भइसक्नुपर्ने थियो। तालुकवाला निकायले अनुसन्धान पूरा गरी प्रतिवेदन बुझाइसकेको अवस्थामा त्यसैको क्षमतामाथि प्रश्न उठ्ने गरी आयोग गठन गर्नु आफैंमा दुर्भाग्यपूर्ण कार्य हो। यसबाट विधायिकालाई कानुन र आफैंले स्थापित गरेका निकायप्रति विश्वास नरहेको देखिन्छ। आयोगको क्षेत्राधिकारमा अनुसन्धान, तहकिकात, पक्राउ र खानतलासीको अधिकार हुनुपर्ने अडानले गर्दा शक्तिपृथकीकरणको सिद्धान्तलाई खल्बल्याउने काम हुँदै जान्छ। प्रहरी लगाएर दोषी पक्राउ गर्ने, दोषी करार गरी जेल हाल्ने, दण्ड-जरिवाना तोक्नेलगायत काम गर्ने अधिकार दिने हो न्यायिक निरूपणको सिद्धान्तविपरीत हुन जान्छ भन्ने मान्यता रहेजस्तै खास उद्देश्यका लागि गठन हुने आयोगलाई यस्तो असीमित अधिकार दिनु कत्तिको उचित होला ! विचारणीय प्रश्न छ।

सामान्यत: आयोग गठन भनेको समस्या पहिचान र राज्यलाई नीतिगत संरचनागत उपाय अपनाउन सिफारिस गर्ने पद्धति वा परिपाटी हो। त्योभन्दा बढी कुनै पनि आयोगले गर्न मिल्दैन, हुँदैन पनि। कुनै पनि आयोगलाई अनुसन्धान, तहकिकात र खानतलासी गर्नेलगायत अधिकार दिनुहुँदैन भन्ने सर्वमान्य सिद्धान्त हो। खानतलासी भन्नेबित्तिकै फौजदारी कारबाहीको सिलसिलामा व्यक्तिगत गोपनीयताको अपहरण वा हस्तक्षेप गर्ने काम भन्ने बुझिन्छ, जुन प्रचलित कानुनको अधीनमा रहेर सम्पन्न गर्नुपर्ने हुन्छ। खानतलासी भनेको पुलिस पावर हो, जुन सिभिल अथोरिटीलाई हुँदैन। आयोग भनेको सिभिल अथोरिटी हो। मिलिटरी पावर र पुलिस पावरभन्दा सिभिल पावर वा अथोरिटी भिन्दै हुन्छ। सिभिल पावरले तथ्य संकलन गर्ने, समस्याको जड पत्ता लगाउने र नीतिगत सुधारका लागि सिफारिस गर्नेलगायत काम सम्पन्न गर्छ। प्रचण्डराज अनिलको दासढुंगा हत्याकाण्ड छानबिन आयोग, भैरव लम्सालको सम्पत्ति छानबिन आयोग, जनार्दन मल्लिकको ०४६ सालको आन्दोलनमा बल प्रयोगसम्बन्धी जाँचबुझ आयोगलगायत अनेकन घटनामा बनाइएका आयोगहरूको कामकारबाही अध्ययन गरे झनै यो कुरा स्पष्ट हुनेछ। आयोगको उद्देश्य र क्षेत्राधिकार राज्यका मौजुदा निकाय र कानुनको धज्जी उडाउने नभएर तिनमा रहेको कमी कमजोरी पत्ता लगाउने र समाधानका लागि सुझावसम्म पेश गर्ने हो, न कि डण्डा लिएर दादागिरी गर्ने। आयोगहरूले छानबिन गरे पनि आफैंले मुद्दा दायर गरेको इतिहास कतै देखिँदैन। कुनै दलको आग्रह वा पूर्वाग्रहका आधारमा घटना विशेषमा आयोग गठन गर्दै जाने परम्परा बसाल्ने हो भने शासन विधिले होइन भीडले तय गर्छ। जोसँग ठूलो भीड हुन्छ, जोसँग ठूलो संगठन छ, त्यसैका बलमा दिउँसै रात पार्ने अर्थात् कालोलाई सेतो र सेतोलाई कालो, झुटलाई सत्य र सत्यलाई झुट बनाउने काम हुन्छ। संविधानले तोकेका दायराभित्रै रहेर विधायिकाले काम गर्नु श्रेयष्कर हुन्छ। किनभने सुन प्रकरणमा मात्रै किन आयोग गठन गर्नुपर्‍यो ? यस्तै रस्साकसी बढ्दै जाँदा नक्कली भुटानी प्रकरण र गर्भैमा रहेको गिरिबन्धु टि इस्टेटजस्ता पनि आयोग नै बन्नुपर्ने अत्तो थापिनसक्छ। प्रत्येक घटनामा संसदीय आयोग गठन गर्दै जाने हो भने कानुनी राज्य स्थापना गर्न खडा गरिएका स्थायी संरचनाजस्तै अर्ध तथा न्यायिक निकायको व्यवस्था गर्नुको औचित्य सावित गर्न सकिँदैन। आयोग गठन गर्दै जनतासँग प्रत्यक्ष सम्पर्क राख्ने मूल मुद्दालाई विषयान्तर गर्नु दल र दलको नेतृत्वका लागि मात्र होइन संसदीय प्रणालीमा विश्वास गर्ने सबैका निम्ति हितकर छैन। अहिले सुन प्रकरणमा गठन गर्ने भनिएको आयोगका कारण आयोगसम्बन्धी मापदण्ड र मान्यता रद्दीका टोकरीमा मिल्किने अवस्था देखिएको छ। तसर्थ आयोगलाई आयोग जस्तै बनाउनका लागि आयोगसम्बन्धी राष्ट्रिय तथा अन्तर्राष्ट्रिय मान्यता र अभ्यासको ख्याल गर्न आवश्यक छ। सत्ता परिवर्तन भइरहने भएकाले खास दल वा त्यसका सभासदले आयोग र क्षेत्राधिकारलाई जितहारको विषय बनाउनु हुँदैन। किनभने यस्तो कामले प्रश्रय पायो भने संसदीय प्रणालीप्रतिको जनविश्वासमा धमिरा लाग्छ, दलका असल र इमान्दार कार्यकर्ताहरू कहिल्यै नेता हुन सक्ने छैनन्।

# एक पास २८ फेल – श्रीमान बन्न हुने झेली खेल

'बहुमत फेल-एक्लो बृहस्पति झुठो खेल, क्या हो ?' यो आधुनिक शहर खाने कथाको ठीक जवाफ हो- 'जिल्ला न्यायाधीशको जाँच पास र नियुक्ति।' परीक्षामा सहभागी २११ जनामध्ये पास हुने पारसमणि पोखरेलसँगै फेल हुने १५ जना र परीक्षामा सामेल नै नभएका १३ जना गरी २९ जना पनि न्यायाधीश बनेपछि यो उखान जन्मिएको हो। न्यायसेवा आयोगको अनुरोधमा लोकसेवा आयोगले न्यायाधीशको परीक्षा गराउँदै आएको छ। फेल भएर पनि न्यायाधीश हुने भाग्यमानीको पक्षमा न्यायपरिषद्, न्यायाधीश समाज र नेपाल बार एशोसिएसनले मौन सहमति देखाए जस्तै छ। किनभने फेल हुनेहरू पनि पास गराएको बारेमा कसैले आवाज उठाएको सुनिएको छैन। अरु बेला विधिको कुरा गर्ने न्यायाधीश समाज र वकिलहरूले फेल भएकाहरूलाई न्यायाधीश बनाइएपछि एउटा वक्तव्य पनि निकालेका छैनन्। न्यायाधीश नियुक्तिको यो प्रकरणले लोकसेवाको जाँच नौटंकी सावित भएको छ भने नियुक्त न्यायाधीशको योग्यता र दक्षतामाथि प्रश्न उब्जिएको छ। कतिपयले न्यायाधीश नियुक्तिका लागि जाँचपास गर्न राखिएको प्रावधान नै अव्यावहारिक भएको दाबी गर्दै आएका छन्। जसकारण जिल्ला न्यायाधीशको नियुक्तिमा फेल हुनेहरू पनि समावेश गर्नुपर्ने बाध्यता आइलागेको बताइन्छ। जिल्ला न्यायाधीशको ३८ रिक्त दरबन्दीमध्ये २९ जनाको मात्रै पदपूर्ति भएको छ। प्रश्न उठेको छ- जाँच लिँदै, फेल गराउँदै, फेल हुनेलाई नै नियुक्ति दिने झन्झटिलो र बदनाम काम किन गर्नुपर्‍यो ? योग्यहरूलाई सोझै नियुक्ति दिए सबै टन्टा साफ हुन्न र ! नेपाल बारका अध्यक्ष गोपालकृष्ण घिमिरे भने अधिवक्ताहरूलाई न्यायाधीश हुनबाट रोक्ने कर्मचारीको खेलोफड्कोका रूपमा परीक्षा प्रणालीलाई लिन्छन्। यी सबै कानुनी प्रावधान र दाउपेचले 'एक पास २८ फेल-न्यायाधीशमा सफा झेल' भएको देखिन्छ। अर्कोतर्फ रिक्त पदमा न्यायाधीश नियुक्तिबारे निवेदन माग गरिएको छैन, कसैले निवेदन हालेका छैनन्, सर्ट लिस्ट पनि सार्वजनिक गरिएको देखिँदैन। केका आधारमा न्याय सेवामा कार्यरत यी मात्रै योग्य र दक्ष ठानिए, पारदर्शी छैन।

## शहरभित्र

सुरेश

### सरकारको अनुभूति

*अहिले सरकार देशमा केही नयाँ-नयाँ काम गरिरहेको छ। अस्ति राजधानीमा नयाँ खालको गाडी गुडाउन थालियो। त्यसको उद्घाटन गर्दै मन्त्री प्रकाश ज्वालाले भन्नुभएछ, 'अब हामी जनतालाई देशमा सरकार भएको अनुभूति हुने गरी काम गर्न थाल्नेछौँ।'*

*मन्त्रीज्यूको कुरा सुनेर खुशी लाग्यो। आखिर सरकार अब देशमा सरकार पनि छ है भन्ने अनुभूति दिन खोज्दैछ। यो त राम्रै कुरा हो। तर मन्त्री ज्वालालाई थाहा थिएन कि कुन्नि, देशमा सरकार भएको अनुभूति जनतालाई अहिले होइन, ऊबेलादेखि नै भइसकेको थियो। तपाईं एकचोटी बजार जानुस्, भाउ सुनेपछि थाहा हुन्छ, देशमा सरकार पनि छ। सरकार नभएको भए बजार भाउ कसले बढाउँथ्यो ? एअरपोर्ट जानुस्, त्यहाँ पुगेपछि तपाईंलाई थाहा हुन्छ, देशमा सरकार छ। नभएको भए विदेश जाने ती युवाहरूलाई पासपोर्ट कसले बनाइदिन्थ्यो ? सरकार भएरै त बिचराहरूले विदेश जान पासपोर्ट बनाउन पाए, श्रम स्वीकृति लिन पाए ? तपाईंले दु:ख गरेर एक रूपैयाँ कमाउनुस्, २५ पैसा सरकारले ट्याक्स लिइसक्छ। ट्याक्स तिर्दा पनि तपाईंलाई अनुभूति हुन्छ, देशमा सरकार त रहेछ। नभए ट्याक्स किन तिर्नुपर्‍यो ?*

*देशमा सरकारको अनुभूति हुने यति धेरै कुरा विद्यमान छ। अब त्यसमा मन्त्रीले फेरि अनुभूति गराइदिन्छु भन्दा जनता त्रसित हुँदैनन् र भन्या ?*

### गुरु र 'गुरु'

*त्यसो त काठमाडौंमा जति पनि सडक जाम हुन्छ, त्यसमा गुरुहरूकै दोष रहेको हुन्छ। कहिले कता गाडी रोक्छ, कहिले कता रोक्छ, कहिले रातो बत्तीमा पनि गइदिन्छ, कहिले काट्नै नहुने ठाउँमा पनि बाटो काटिदिन्छ। जाम हुने नै यसले हो। त्यसैले गुरुहरूका नाममा ट्राफिकले चिट काटेको काट्यै हुन्छ। तर पनि गुरुहरू सप्रिएको चाहिँ नाइँ।*

*तर गत हप्ताको तीन दिन भने काठमाडौंमा अर्कै गुरुहरूले जाम मच्चाइदिए। यो जाम गर्नेचाहिँ साँच्चैको विद्यालयका गुरुहरू हुन्। वास्तवमा जाम गर्नमा विद्यालयका गुरुहरू पनि गाडीवाला गुरुहरूभन्दा कम्ता रहेनछन्। यी गुरुहरूले गरेको जाम देखेर गाडीवाला गुरुहरू समेत ट्वाँ परेका छन्। जाम भन्या त यस्तो पो हुनुपर्छ। अहिले गाडीवाला गुरुहरू सोच्दैछन्, सडकमा जाम पार्न के गर्ने हो त्यो ज्ञान विद्यालयवाला गुरुहरूबाट सिक्ने हो कि ?*

*वास्तवमा विद्यालयवाला गुरुहरूको शक्ति कक्षा कोठामा देखिनुपर्ने हो। दुर्भाग्य, सडकमा देखिइरहेको छ। अब शिक्षक नै सडकमा शक्ति देखाउन उद्यत छन् भने विद्यार्थीले टायर बाल्नुशिवाय अरु के पो सिक्थे र !*

### डेडिकेटेड लाइन

*राजधानीमा रेड लाइट मात्र होइन अब रेड रोड पनि आएको छ। काठमाडौंको रत्नपार्कदेखि भक्तपुरको सूर्यविनायकसम्म अब रेड रोडमा गुड्ने गाडी चढेर छिट्टै पुग्न सकिने भएको छ। यसलाई 'डेडिकेटेड लाइन' भनिने रहेछ। यसमा चढेपछि भक्तपुरको सूर्यविनायकसम्म सिधै पुगिन्छ।*

*तर, मलाई लागिरहेको छ, अब जनतालाई काठमाडौंबाट भक्तपुर पुग्ने मात्र होइन, काठमाडौंकै सिंहदरवार भित्रसम्म पनि यसरी नै सिधै पुग्न सकिने एउटा 'लाइन' चाहिएको छ। मान्छे के के काम लिएर सिंहदरवार पुग्छन् तर छिर्न पाउँदैनन्।*

*एक हिसाबले भनौं भने सिंहदरवार त जनताको लागि वर्जित नै छ। त्यसैले अब सिंहदरवार छिर्न पनि यस्तै एउटा डेडिकेटेड लाइन चाहिएको छ। त्यसमा चढेपछि कहीं पनि नरोकिने गरी सिधै सिंहदरवार पुगेर आफ्नो काम गर्न पाइयोस्। यसरी जान पाइने लाइनवाला गाडीचाहिँ कहिलेदेखि शुरु हुन्छ होला है ?*

# नौ जिल्ला, १ ठाउँबाट ५ मन्त्री राख्न मिल्ला ?

सुदूरपश्चिम प्रदेश सभाका सभामुख भीमबहादुर भण्डारीले प्रदेश सरकारविरुद्ध मुख खोल्न थालेका छन्। उनले प्रदेश सरकार असमावेशी भएको मात्र बताएनन् प्रदेश सभालाई काम नदिएर गैरजिम्मेवारबनेको बताए।

म सुन्ने, केही नबोल्ने सभामुख हुन चाहन्न, मैले भनेको कुरा लेख्नुस् भन्दै शुक्रबार प्रदेशसभा सचिवालयमा उनले भने यहाँ नौ जिल्ला छन्, सरकारमा पनि नौ मन्त्री छन् तर त्यसमा पनि एउटै जिल्लाका पाँच मन्त्री छन् अनि कसरी सरकार समावेशी भयो त ! एउटा महिलामन्त्री पनि छैन, राज्यमन्त्रीमा थन्क्याइएको छ।

हुन पनि कैलाली-२ को क बाट निर्वाचित कमलबहादुर शाह मुख्यमन्त्री, कैलाली क्षेत्र नम्बर २ कै ख बाट निर्वाचित रामेश्वर चौधरी भूमि व्यवस्था, कृषि तथा सहकारीमन्त्री, ५ को कका रमेश धामी उद्योग, पर्यटन, वन तथा वातावरणमन्त्री, ख का प्रकाशबहादुर देउवा भौतिक पूर्वाधार र कैलाली क्षेत्र नम्बर १ क का कैलाश चौधरी कृषि राज्यमन्त्री छन्। मुख्यमन्त्री शाह र भौतिकमन्त्री देउवा नेपाली कांग्रेस, वनमन्त्री धामी माओवादी तथा चौधरीद्वय नागरिक उन्मुक्तिका हुन्। सभामुख भण्डारी त्यत्तिमा रोकिएनन्। उनले भने- जनताले प्रदेश सभाले काम गरेन भनेर टिप्पणी गरिरहेका छन् तर प्रदेशसभा अचानो भएको छ, सरकारले विधेयक ल्याउँदैन, सभाले आफैं विधेयक उत्पत्ति गर्न मिल्दैन, सरकारकै कमजोरीका कारण सभा चलेको छैन। उनले सरकारले इफ, बट भन्न पाउँदैन प्रदेश सभालाई बिजनेश दिनुपर्छ पनि भनेका छन्।

फरक प्रसंगमा उनले अगाडि बताए- दलका नेता-सचेतकहरूले ऐन, कानुन बनाएर सुविधा लिन मिल्छ तर नियमविपरीत लिइएका दुईवटा गाडी फिर्ता भएका छन् माननीय खगराज भट्टले भने गाडी फिर्ता गर्नुभएको छैन, तोकिएको समयभित्र गाडी आएन भने प्रहरी लगाएर फिर्ता लिन्छौं। हामी कुन पार्टीको माननीय भनेर चिन्दैनौं 'कानुन पालना गर्छौं।' खगराज र सभामुख भण्डारी माओवादी पार्टीबाटै प्रदेश सभामा आएका हुन्। यसैबीच, चारवटै समितिको चुनाव गर्ने कार्यतालिका निकालेको प्रदेश सभा सचिवालय आफ्नो निर्णयबाट पछि हटेको छ। सचिवालयले सभामुखको निर्देशनमा शुक्रबार सभापतिहरूको चुनाव गर्ने भनेको थियो।

रेशम चौधरीको नागरिक उन्मुक्तिले चार वटा समिति बढाएर ६ पुर्‍याउनुपर्ने र आफूले दुई समितिको सभापति पाउनुपर्ने माग राखेको थियो। त्यसअनुसार कांग्रेस तयार पनि भयो तर माओवादी र एकीकृत समाजवादीले समिति थप्न नमानेपछि चुनाव गर्ने तयारी गरिएको थियो।

# मुख्यमन्त्री कार्यालयमा चारै जना शर्मा

नेकपा माओवादी केन्द्रले तीनमहिने अभियान थालेर पार्टी तथा नेताको रूपान्तरण अभियान थालिरहेको बेला उसका पोलिटब्युरो सदस्य तथा कर्णाली प्रदेशका मुख्यमन्त्री राजकुमार शर्माले अभियानकै धज्जी उडाएका छन्। उनले सचिवालयमा आफ्नै परिवारका सदस्यहरूलाई नियुक्ति दिएका छन्। दुई जनालाई कार्यकालको शुरुमै नियुक्ति दिएका थिए भने दुई जनालाई केही दिनअघि मात्र सल्लाहकार बनाएका छन्। उनका प्रमुख प्रशासनिक सल्लाहकार भरतकुमार शर्मा हुन्। नाताले मुख्यमन्त्रीका भिनाजु उनी यसअघि स्थानीय विकास अधिकारी, प्रमुख जिल्ला अधिकारीदेखि कर्णाली प्रदेश सरकारको निमित्त सचिव थिए। त्यस्तै, शर्माले प्रमुख स्वकीय सचिवमा पनि आफ्नै गृह नगर चौरजहारीका शैलेश शर्मालाई नियुक्त गरेका छन्। जनसम्पर्क सल्लाहकारमा हरिमाया शर्मा र प्रेस सल्लाहकारमा प्रतिक शर्मालाई नियुक्त गरेका छन्। जिल्ला समन्वय समिति र स्थानीय सरकार मिलेर मदिरा निषेध अभियानअन्तर्गत व्यवसायीको सटर बन्द गरे पनि आठबिसकोटमा भने माओवादी निकटहरूले सञ्चालन गरेको करोडौं लगानीको मदिरा उद्योगलाई खुला गरेका थिए।

# युवती ओसार्ने अरु, जेल पर्ने पत्रकार !

मकवानपुरका पत्रकार रमेश बञ्जारा केही समययता भीमफेदीस्थित कारागारमा छन्। पुर्पक्षका लागि जेल पठाइएका उनको पेसी सरेको सर्‍यै गर्छ, क्रिकेटर सन्दीप लामिछानेको मुद्दाझैं। बञ्जारामाथि पनि लामिछानेको झैं जबरजस्ती करणी मुद्दा मकवानपुर प्रहरीले चलाएको छ। अदालतमा विचाराधीन मुद्दा भएकाले धेरै बहस, व्याख्या र छलफल गरिएको छैन। तर, जसले जबरजस्ती करणी भयो भनेर जिल्ला अदालत हेटौंडामा जाहेरी दिएकी थिइन्, उनैले मलाई 'मलाई फलानो' ले जाहेरीमा सही गर्न लगाएर मुद्दा हाल्न लगाएका हुन्, मलाई जबरजस्ती करणी भएको छैन भनेर लिखित बयान दिएकी छन्। त्यसपछि पनि अदालतले डिएनए रिपोर्ट खोज्ने, अरु कागजहरू जम्मा गर्ने भन्दै अल्झाउन छाडेको छैन।

पत्रकार बञ्जारामाथि जबरजस्ती करणीको मुद्दा चल्दैगर्दा फेरि अर्को ट्विस्ट आयो। जाहेरीमा जबरजस्ती करणी भएको भन्ने व्यहोरामा उल्लेख भएको समय र स्थानको एउटा सिसिटिभी फुटेज हेटौंडाकै अर्का पत्रकार रविन्द्र गौतमले आफ्नो अनलाइन पत्रिकामार्फत् सार्वजनिक गरे। उक्त फुटेजमा बन्जाराले जबरजस्ती करणी गरेको भनिएको समयमा ती महिलालाई हेटौंडाकै कांग्रेस नेता अर्जुन तिवारीले बुलेट बाइकमा राखेर घटनास्थलतर्फ लगिरहेको देखिन्छ। समाचारको आशय थियो-घटना हुँदाताका ती महिला र बञ्जाराको भेटै भएको छैन भने कसरी बलात्कार सम्भव छ ? र, ती मान्छे को हुन् जसले महिलालाई बुलेट बाइकमा बोकेर हिँडिरहेको छ ? यसरी बिना अपराध बनावटी मान्छे तयार पारेर जघन्य अपराधको मुद्दातिर पत्रकारलाई तान्न खोजिएपछि मकवानपुरे पत्रकारहरू तरंगित भए। धेरैले पत्रकार बञ्जारामाथि अन्याय भएको रहेछ भन्दै सान्त्वना पनि दिए। तर, पेसी निरन्तर सार्ने, गोलाप्रथा गर्दा पनि एकै जना न्यायाधीश परिरहने तरिकाले बञ्जारा अहिले पनि पुर्पक्षमै छन्। यता प्रकाशित समाचार र भिडियोले आफ्नो मानहानी भएको भन्दै बुलेट बाइकमा महिला बोक्ने अर्जुन तिवारीले अनलाइन पत्रिकाका सम्पादक एवं सञ्चालक रवीन्द्र गौतममाथि लिखित मानहानीको मुद्दा दायर गरेका छन्। समाचारमा चित्त नबुझे खण्डन गर्ने र त्यसले पनि नभए प्रेस काउन्सिलमा उजुरी गर्नुपर्ने कानूनी व्यवस्थालाई समेत अवमूल्यन गरी दायर भएको मुद्दामा गौतमलाई ३ वर्ष कैद र ३ देखि ५ वर्ष क्षतिपूर्ति माग गरिएको छ।

यसरी निरन्तर पत्रकारमाथि एकपछि अर्को गर्दै मकवानपुरमा आक्रमण जारी छ। पत्रकारिता धारिलो भएको हो वा गलत गर्नेहरू पत्रकारलाई तर्साएर राज गर्न चाहन्छन् ? त्यसबारे बहस छलफल होला। तर, पछिल्लो समय पत्रकारमाथि यसप्रकारको दुर्व्यवहार भइरहँदा पत्रकार महासंघले घटनाको सहजीकरण गर्ने, न्यायका लागि पहल गर्ने, सुरक्षाको प्रत्याभूति गर्ने अथवा पत्रकारहरूलाई पनि सीमारेखा ननाघ्नका लागि सचेत पार्नेसम्मका काम गर्न सकिरहेको छैन। नेपाल पत्रकार महासंघ बागमती प्रदेशका महासचिव कृष्ण सारुमगरले प्रेस काउन्सिलले हेर्नुपर्ने मुद्दा अदालतमा पेश भएकाले आवश्यक सहजीकरणका लागि काउन्सिलसँग समन्वय गरिररहेको बताउनुभयो। पत्रकारलाई एकपछि अर्कोगरी फसाउने कार्यका विरुद्ध मकवानपुरका पत्रकारहरू एकजुट हुन थालेका छन्।

# पत्रकारिताको भोकले जुन युवतीलाई पागल बनायो

जीवन डाँगी



'भिक्टोरियन युग'को सबैभन्दा चर्चित खोज पत्रकारमध्येकी थिइन्– नेल्ली ब्लाई । उनी 'मूर्ख पत्रकार' थिइन्, 'जासुस युवती' । नेल्ली ब्लाई पत्रकारिताको ब्राण्ड हुन् । विद्रोही थिइन्– 'विभेद, बेथिति र भ्रष्टाचार'विरूद्ध लेखिरहन्थिन् । नेल्ली मर्नुअघिसम्म सेलिब्रिटी थिइन् ।

सन् १८८७ तिर भने उम्दा रिपोर्टरको रुपमा उदाइन् । अनि, सन् १९११ सम्म सनसनीपूर्ण जीवनचक्रमा रमाइरहिन् । उन्नाइसौं शताब्दीको अन्तिम–दशकतिर बेस्सरी चर्चा कमाइन् भने अलिकति बदनामी पनि हात लाग्यो उनलाई । उनीबारे पत्रकारिताका अनेकौं मान्यता छन् । २३ वर्षको कलिलो उमेरमै नेल्लीले 'अमेरिकी संसार' हल्लाइन् । 'ब्ल्याकवेल टापु'को क्रूर–कथामार्फत् खोज पत्रकारिताको जग बसालिन् । झुपडीको कथा लेखिन् । कारखाना र अस्पतालभित्रको कथा लेखिन् । वेश्यालयको कहालीलाग्दो व्यथा लेखिन् । आप्रवासी महिलामाथि प्रहरीको दुर्व्यवहार लेखिन् । नेल्लीले 'ब्ल्याकवेल टापुको स्टोरी ब्रेक' गर्नुअघि बिरामीहरू अकालमै ज्यान गुमाउँथे । जिउँदै मरिरहेका हुन्थे । डरलाग्दो थियो– न्युयोर्कका अधिकारी, डाक्टर र नर्सहरूको रबैया । मानसिक बिमारीलाई चर्को यातना दिइन्थ्यो । कुटपिट गरिन्थ्यो ।

'ब्ल्याकवेल टापु'बाट फर्केपछि नेल्लीले 'द न्युयोर्क वर्ल्ड'मा छापेको समाचार– आफ्नो भोगाइ र क्रूरताको दस्तावेजीकरण थियो । उनी सनसनीपूर्ण समाचार लेखिरहन्थिन् । जीवनकालमा राजनीतिज्ञको अन्तर्वार्ता लिइन् । हत्याराको अन्तर्वार्ता लिइन् । आफूलाई खतरासँग जुधाइन् । विवादित भइन् । प्रशंसा र आलोचना खेपिन् । तर, वादविवादमा उत्रिनुको साटो सन् १८८९ मा विश्व भ्रमणमा निस्किइन् ।

नेल्ली संकुचित समाजभन्दा उपल्लो तहमा थिइन् । मनभित्रको कुण्ठा र आक्रोशलाई अक्षरमार्फत बगाउँथिन् । 'इन्भेष्टिगेटिभ' र 'पपुलिस्ट' दुबै शीर्षकमा रमाइन् । १६ सय महिलालाई 'ब्ल्याकवेल्स आइरल्याण्ड'को नर्कबाट जोगाइन् । ७२ दिनमा विश्व–भ्रमण गरेर 'जुल्स भेर्न'को रेकर्ड तोडिन् ।

सन् १८७० देखि सन् १९०० अखबारको युग थियो । अमेरिकीहरू खोजीखोजी पत्रपत्रिका पढ्थे ।

नेल्लीका दर्जनौं नाम छन्– 'नेल्ली ब्लाई' बन्नुअघि 'लोन्ली अर्फन गर्ल' थिइन् । त्यसअघि 'एलिजाबेथ जेन कोचरन' थिइन् । बा–आमा उनलाई 'गुलाबी' भनेर बोलाउँथे ।

नेल्ली हिजोआज हुन्थिन् भने टिकटकमा छाइरहेकी हुन्थिन् । टेलिभिजनमा समाचार भट्याइरहेकी हुन्थिन् । अनलाइनमा कथा लेखिरहेकी हुन्थिन् । फेसबुक वा टिकटकको लाइभमा भेटिन्थिन् । तर उनी अँध्यारो युगमा जन्मिइन् । र, कहिल्यै नमेटिनेगरी इतिहासमा आफ्नो नाम 'नेल्ली ब्लाई' लेखेर गइन् ।

•••

पश्चिमी पेन्सिलभेनियास्थित 'कोचरन्स मिल्स'का जमिनदार, मुखिया र न्यायाधीश थिए– माइकल कोचरन ।

उनी आर्मस्ट्रङ काउन्टीका न्यायाधीश थिए । गाउँमा दुईतले घर थियो । एउटा गाई, घोडा र दुइटा कुकुर थिए । उनको परिवार कामदारबाट मालिक बनेको थियो ।

माइकलकै परिवारले बसालेको कोचरन्स मिल्स गाउँ । परिवार ठूलो थियो, १५ जना छोराछोरीमध्ये पहिलो श्रीमतीबाट १० जना । दोस्रो विवाह गरे । ५ जना छोराछोरी थपिए । दोस्रो श्रीमतीको तेस्रो सन्तानका रुपमा सन् १८६४ मा जन्मिइन्– एलिजाबेथ जेन कोचरन ।

उनी 'विद्रोही छोरी' थिइन् । एलिजाबेथ ६ वर्षको हुँदा बुवा बिते । परिवार बाँडियो । बुवाको मृत्युपछि 'एउटा धनी र जमिनदार'को परिवार कमजोर हुँदै गयो ।

एक वर्षपछि एलिजाबेथकी आमाले घर–जग्गा लिलाम गर्नुपर्‍यो । आर्थिक संकट गहिरिँदै जाँदा दुःख खेप्नुपर्‍यो । एकैपल्ट सडकछाप बने न्यायाधीशका सन्तानहरू । बुवा बितेपछि एलिजाबेथकी आमा पोइल गइन् । झट्केलो बुवा क्रूर थियो । रक्सी पिउँथ्यो, आमालाई पिट्थ्यो । अन्ततः छोरीको आग्रहमा अदालत धाइन्, दोस्रो श्रीमान्बाट उन्मुक्ति पाइन् । एलिजाबेथ स्वतन्त्रताको पक्षपाती थिइन् । आमाको स्वतन्त्रता खोज्दै अदालतसम्म बयान दिन गइन् । आमालाई गरिबीले थिच्यो । सन्तान हुर्काउनै हम्मेहम्मे पर्‍यो ।

एलिजाबेथ अखबार पढ्थिन् । परिवारको अवस्था नाजुक हुँदा स्कूल जान सकिनन् । आमासँग बस्थिन्, बाँदरसित खेल्थिन् । आमाको खुशी र आफ्नो भविष्यबारे चिन्तित थिइन् । पढाइ राम्रो थियो, इण्डियाना नर्मल स्कूलमा भर्ना भइन् । तर, शुल्क तिर्ने पैसा नहुँदा निकालिइन् । एलिजाबेथकी आमा कोचरन्स मिल्सबाट काम खोज्दै पिट्सबर्ग गइन् । १५ वर्षको उमेरमा उनी पनि आमाकै पछि लागिन् । पिट्सवर्ग पुगेपछि सात वर्षभित्र घर बनाउने सपना देखिन् । बोर्डिङ स्कूलमा आमालाई सघाइन् ।

आमाको काम नहुँदा अखबार पढेर बस्थिन् । लेखनमा रुचि थियो । फुटकर देखेका–भोगेका कथा लेख्थिन्, डायरीभित्रै थन्क्याउँथिन् । त्यतिखेरको अमेरिकी समाज रुढीवादी थियो । महिलालाई हेपेर विचारहरू लेख्थे अखबार । महिलाहरू सिलाइकटाइ र चुलोचौकोमै सीमित हुन्थे । अखबारका स्तम्भहरू पढेर रिसाउँथिन्– एलिजाबेथ । किनकि– त्यहाँ महिलालाई हेपिएको हुन्थ्यो । सहपाठीलाई अखबारका पाना देखाउँदै सम्पादक र स्तम्भकारलाई गाली गर्थिन् उनी ।

सन् १८८५ मा स्थानीय पत्रिका 'पिट्सबर्ग डिस्प्याच'मा छापिएको एउटा लेख पढिन् । उनी असहमत भइन् । निकै रिसाइन् । लेख थियो– 'महिलाहरू पुरुषका सहयोगी हुन् ।' महिलालाई मतदान गर्ने अधिकार थिएन । घरबाहिर निस्केर जागिर गर्ने कल्पनासमेत थिएन ।

एलिजाबेथले लेख पढेपछि सम्पादकलाई पत्र लेखी पठाइन् तर आफ्नो नाम लुकाएर । एलिजाबेथको पत्रले सम्पादक जर्ज ए. म्याडेन तरुन्तै प्रभावित भए । पाठक–पत्र छापिदिए । लेखकलाई भेट्न चाहेको सूचना पठाए ।

एलिजाबेथ खुशी हुँदै अखबारको कार्यालयमा गइन् । सम्पादकले उनलाई 'पिट्सबर्ग डिस्प्याच' पत्रिकामा काम दिए । तर नाम भने फेरिदिए । एलिजाबेथको पहिलो लेखमा नाम थियो– 'लोन्ली अर्फन गर्ल' । सम्पादकको सल्लाहमा नाम फेरियो– नेल्ली ब्लाई ।

•••

अखबारको भित्रिकुनाबाट पहिलो पृष्ठमा छाउन थालिन्– नेल्ली ब्लाई । नेल्ली युवती शोषित भएको समाचारसहित अखबारको कार्यालय पुगिन्– एकदिन । समाचार राम्रो थियो तर सम्पादक नछाप्ने तहमा पुगे । कथा पीडित युवतीहरूको थियो । कारखाना धनीहरूले चलाएका थिए ।

अखबारका सम्पादक शहरिया कुलीन वर्गलाई रिसाउन दिन चाहँदैनथे । उनी नेल्लीसित रिसाएनन् तर अत्याचारको समाचार छाप्न चाहेनन् । लगत्तै, उनलाई अर्को पृष्ठको जिम्मेवारी सुम्पिइयो– जहाँ महिलाका मुद्दालाई किनारामा पारियो । काम गर्दै जाँदा नेल्ली विदेशी संवाददाता बन्न इच्छुक देखिइन् । मेक्सिको जाने निधो गरिन्, एउटा नयाँ बाटो पत्ता लगाइन् । मेक्सिकन जनताको जीवनशैलीबारे चासो राखिन् । सम्पादक राजी भए । उनी मेक्सिको गइन्, राम्रो रिपोर्टिङ गरिन् । सिरिजमा कथाहरू छापिन् ।

नेल्ली मेक्सिकोको बसाइ सकाएर पिट्सबर्ग फर्किइन्

**नेल्ली संकुचित समाजभन्दा उपल्लो तहमा थिइन् । मनभित्रको कुण्ठा र आक्रोशलाई अक्षरमार्फत बगाउँथिन् । 'इन्भेष्टिगेटिभ' र 'पपुलिस्ट' दुवै शीर्षकमा रमाइन् ।**

तर यत्तिमै सन्तुष्ट थिइनन् । सम्पादकले हेपिरहेका थिए, पहिलेभन्दा कम स्थान दिएका थिए । उनी दिक्क भइन्, नेल्लीलाई लाग्थ्यो– 'सानो शहरमा साँघुरो सोच छ ।'

'हेपिएका महिलाका कथा दबाउँदा' बेचैन हुन्थिन् । सोचिन्– न्युयोर्क शहरको विशाल अखबार उद्योगले महिला पत्रकारलाई राम्रो काम दिनेछ । यसर्थ उनी न्युयोर्कतिर लागिन् । र, सम्पादकलाई सन्देश दिइन्– न्युयोर्क जाँदै छु ।

•••

नेल्ली ब्लाई सन् १८८७ मा सपनाको शहर न्युयोर्क पुगिन् तर कसैले काम दिएनन् । लगातार ६ महिना न्युयोर्कका अखबारको ढोका ढक्ढक्याइन् । कुनै पनि अखबारका मालिक र सम्पादकले पत्याएनन् । उनी 'पिट्सवर्ग डिस्प्याच' मा रिपोर्टिङ गर्दा उम्दा पत्रकार थिइन् । तर, नेल्लीलाई न्युयोर्कले 'पत्रकार' ठानेन ।

उनी 'द न्युयोर्क मेल एण्ड एक्सप्रेस', 'द न्युयोर्क हेराल्ड' र 'द न्युयोर्क सन'को दैलोमा पुगिन् । नाम चलेका मिडिया हाउसले महिला पत्रकारलाई 'पत्रकार' देखेनन् । नेल्लीले अखबारमा जागिर पाइनन्, बिचलित पनि भइनन् । दैलो धाउँदा–धाउँदा 'द न्युयोर्क वर्ल्ड'मा काम पाइन् । त्यो अखबारका मालिक थिए– जोसेफ पुलित्जर । अनि, सम्पादक टोनी माक्रेन ।

अखबारले सनसनीपूर्ण समाचार मात्र खोज्थ्यो । र, नेल्लीलाई भनियो– 'ब्ल्याकवेल टापुको स्थलगत रिपोर्टिङ गर ।' त्यो टापु पागलहरूको उपचार केन्द्र थियो । नेल्ली पुलित्जर र टोनीबाट प्रभावित भइन्, किनकि उनी कथा लेख्ने पत्रकार थिइन् । उनलाई पत्रकारितामै रमाउनु थियो । अखबार आलोचित थियो । सनसनीपूर्ण समाचार छाप्थ्यो । तर, हिम्मत हारिनन् । टापु जाने निधो गरिन् । सद्दे मानिस टापुमा जान सक्दैनथे । अनि, बिमारीहरू सञ्चो भएर घर फर्किंदैनथे ।

•••

कोठामा पुगेर ऐनाअघि उभिइन् । र, 'पागल महिला'को नक्कल गरिन् । किनकि उनलाई रिपोर्टिङका लागि 'पागल' बन्नुथियो । पत्रकारिताको भोकले २३ वर्षीया युवतीलाई 'पागल' बनायो । उनी कोठाबाट निस्किएर 'महिलाकेन्द्र'मा पुगिन् । जहाँ दर्जनौं महिलाहरू आश्रय लिइरहेका थिए । उनी पनि त्यहीँ मिसिइन्, 'पागल' बन्ने उपाय खोजिन् । उनलाई कसैले चिन्दैनथे, नाम बदलेर गएकी थिइन् ।

महिलासामु अस्वाभाविक हर्कत देखाएपछि अस्पताल लगियो । अनि, चिकित्सकको दाबी थियो, 'उनी पनि मानसिक बिमारी हुन्, ब्ल्याकवेल टापु लगियोस् ।'

नेल्लीलाई पहरेदार र नर्ससहित नदीले घेरिएको 'उपचार–केन्द्र' लगियो । उनी डराउँदै–डराउँदै त्यहाँ गइन् । पागलपनको नाटक गर्नु चानचुने विषय थिएन । तैपनि उनले गरिछाडिन् । पागलखाना गएकै दिन नेल्लीले पर्खालभित्र डरलाग्दो दृश्य देखिन् । उनलाई टापुको महिला–वार्डमा राखियो । पागलपनको कल्पित भूमिका कम्ती सकसपूर्ण थिएन । उनले चारैतिर हेरिन्, बेस्सरी हल्लिइन् । 'पागल–महिला'हरूको अनौठो भीड थियो । नराम्रो कपडा लगाएका उनीहरूले नेल्लीलाई हेरिरहे । उनी १६ सय पागल महिलासित बसिन् ।

अमानवीय व्यवहारको मारमा परिन् उनी । टाउकोमा हिउँजस्तै चिसो पानी खन्याइयो । काठको बेञ्चमा घण्टौं सीधा बस्न भनियो । सुत्न खोज्दा चिमोटियो । सबैलाई पालैपालो झाडुले कुटियो । नराम्रो खाना दिइयो । नुहाइसकेपछि यातना भोगिन् ।

नेल्लीलाई भयानक त्रासले घेर्दा पनि 'रिपोर्टिङ'को भोकले सताइरह्यो । उनी टापुमा पागल भएरै बसिन् । पागल–महिलाको मन जितिन् । पागल महिलासितै सुतिन् ।

थुनिएर बस्दा नेल्लीले दर्जनौं महिलासित कुराकानी गरिन् । धेरैजसो त आप्रवासी महिला थिए, भाषा बुझ्दैनथे । उनीहरू भाषाका कारण पीडा सुनाउन सक्दैनथे । तर, उनीहरूको हैरानी आँखाबाट छल्किने आँशुले बताउँथे ।

बिमारीका लागि नर्क थियो– 'ब्ल्याकवेल टापु' । उनले पागलखानामा दश दिन बिताइन् । 'द न्युयोर्क वर्ल्ड'को पहलमा 'जेल' बाहिर निस्किइन् । नेल्लीले 'स्टन्ट जर्नालिज्म'को भेलमा डुबुल्की मारिन् । 'इन्भेष्टिगेटिभ जर्नालिस्ट' भइन् । उनी टापुमा सनसनीपूर्ण खुलासा गर्ने उद्देश्यले गएकी थिइनन् । तर सनसनीपूर्ण कथा नै भेटिन् ।

•••

पागलखानाबाट फर्केपछि नेल्लीका एक दर्जन कथा छापिए । उनले शारीरिक र मानसिक दुर्व्यवहारको कहालीलाग्दो कथा संसारसामु बाँडिन् । पालेपालो उपचारकेन्द्रका कथाहरू छापिन् । उनी नबाँचे पनि त्यो टापुको 'रिपोर्टिङ' बाँचिरहेको छ ।

नेल्लीले 'टेन डेज इन अ म्याडहाउस' पुस्तक निकालिन् । आफूले भोगेका अनुभवहरूलाई इमानदारीपूर्वक अखबार र पुस्तकमार्फत् वर्णन गरिन् । दश दिनको 'ब्ल्याकवेल टापु'को बसाइपछि अमेरिकी संसारमा एकाएक छाइन् ।

न्युयोर्क शहरको कुनाकुनामा सुनिइन् उनी । नेल्लीको भोगाइपछि न्युयोर्कका डाक्टर र नर्सहरूले विश्वाससमेत गुमाए । 'टेन डेज इन अ म्याडहाउस' खोज पत्रकारिताको एउटा युग बन्यो । नेल्ली ब्लाईको नाम त्यतिखेर हर–कोहीको जिब्रोको टुप्पोमा थियो । नेल्लीको कामले क्रूर र अमानवीय अमेरिकी सार्वजनिक नीति फेरियो । अखबारले चर्चा कमायो । उनको रिपोर्टिङले विश्व पत्रकारिता जगतमा नयाँ इँटा थप्यो । आफूसित दुःख भोग्ने अभागी महिलाहरूलाई बाहिर निकाल्न नपाउँदा दुःखी थिइन् उनी । न्युयोर्क शहरले 'न्युयोर्क वर्ल्ड'को समाचारपछि बिरामीहरूको हेरचाहका लागि लाखौं रकम छुट्यायो । र, न्युयोर्कले मानसिक बिमारीलाई हेर्ने नजर बदल्यो । खोजी पत्रकारिताले परिवर्तन ल्याएको थाहा पाउँदा उनी सन्तुष्ट थिइन् ।

•••

खोज पत्रकारिताको भोक नमेटिँदै नेल्लीलाई 'विश्व–रेकर्ड' तोड्ने हुटहुटी जाग्यो । उनी सन् १८८९ नोभेम्बर १४ को दिन विश्व भ्रमणमा निस्किइन् । ७२ दिन ६ घण्टा १० मिनेटमा विश्वलाई एक फन्को लगाइन् । नेल्ली गाडी, मोटरसाइकल, पानी–जहाज, रिक्सा र रेलमा घुमेर न्युजर्सी फर्किइन् । उनले डुलिहिँड्दा देखे–भोगेका कथा–कहानी अखबार छापिन् । उनले 'अराउण्ड द वर्ल्ड इन सेभेन्टी टु डेज' पुस्तक निकालिन् । बाँचुन्जेल विवादै विवादको बाटो हिँडिन्, पत्रकारितामै रहिन् । खासगरी लोकप्रियताले लखेट्दा ।

उनी आफूले भेटेका कथालाई निखारेर लेख्थिन् । नेल्ली स्टोरी लेख्नुअघि– स्रोतसँग घण्टौं गफिन्थिन् । अन्तर्वार्ता गर्थिन् । स्थलगत रिपोर्टिङ गर्थिन् । स्थान र अवस्थाको चित्रण गर्थिन् । अनि– चिया पिउँदै एकान्तमा बसेर लेख्न थाल्थिन् ।

नेल्लीको पत्रकारिता अभावै–अभाव र चुनौतीले थिचिएको थियो । तैपनि, सफल पत्रकार भइन् । उनका कतिपय रोचक किस्सा छन्- ३० वर्षको उमेरमा ७० वर्षीया करोडपति रोबर्ट सिमनसँग विवाह गरिन् ।

वृद्ध श्रीमान्लाई सघाउँदै, पत्रकारितामा रमाइन् । पत्रकारिताबाट निष्क्रिय भइन् । बिहे गरेको १० वर्षपछि सन् १९०४ मा श्रीमान् बिते । उनी श्रीमान्को कम्पनी सम्हाल्दै बरालिइन् । अखबारमा स्तम्भ लेखिन् । अमेरिकी अनाथहरूको 'काख' बनिन् उनी । समाजसेवामा खटिइन् । सहयोगीहरूको भरपर्दा श्रीमान्ले जोगाइदिएको कम्पनी डुब्यो र अष्ट्रिया गइन् । फेरि पुस्तक लेख्दै पत्रकारितामै फर्किइन् । सन् १९११ को महिला मताधिकार परेड र पहिलो विश्वयुद्धको दौरान रिपोर्टिङमै खटिएकी थिइन् । सन् १९१९ तिर उनी 'न्युयोर्क इभिनिङ जर्नल'मा कार्यरत थिइन् । २३ वर्षको उमेरमा थालेको खोज पत्रकारिता बिट मार्दै ५७ वर्षको उमेरमा निमोनियाका कारण अस्ताइन् ।

# चीनको नयाँ नक्सा र अबको तनाव



नारायणबाबु थापा, सशस्त्रका पूर्वएआईजी

राजनीति होस् या कूटनीति- सरल रेखामा विचरण गर्दैन भन्ने कुरा भारत-चीनको सम्बन्धमा पनि लागू हुँदै छ । २८ अगष्ट २०२३ मा आएर चीनको प्राकृतिक स्रोत मन्त्रालयले देशको नयाँ नक्सा सार्वजनिक गरेको छ । जसभित्र भारतको पूर्वोत्तर अरुणाचल प्रदेश र पश्चिमोत्तर अक्साई चीनलाई समेत समावेश गरिएपछि भारत-चीन सम्बन्धले नयाँ मोड लिने निश्चित छ । भारतले तत्कालै कूटनीतिक तवरमा उक्त नक्साको कुनै अर्थ नहुने कडा टिप्पणी गरे पनि यसले एशियाकै उदीयमान भनिएका र सामरिक, आर्थिक, भौगोलिक, जनसांख्यिक तवरमा ठूला दुई देश बीचको तनावलाई मत्थर पार्ने हैन, झन् बढाएर लैजाने निश्चित छ ।

चीनले यही बेला किन नयाँ नक्सा सार्वजनिक गर्‍यो भन्ने अन्तर्य विस्तारै उजागर हुँदै जाला तर योभित्र नेपालसमेत प्रभावित हुन सक्ने देखिन्छ । भारत, नेपाल र चीनले जारी गरेको आ-आफ्ना नक्सामा अन्तरवस्तु केही मिल्छन् र केही मिल्दैनन् । भारतले जारी गरेको नक्सामा नेपालको भूमि मात्र समेटिएको छैन त्यसमा भारतकै आधिपत्य स्थापित गरिँदै आएको छ भने चीनले जारी गरेको नक्साअन्तर्गत अक्साई चीनबाहेक १९१४ को सिमला सम्झौता र अझ १९६२ को युद्धपश्चात् पनि अरुणाचल प्रदेशमा भारतकै आधिपत्य छ । भारतले जारी गरेको नक्साउपर मात्र हैन कथित स्वामित्वको प्रतिरोधमा नेपालले संविधानमै संशोधन गरेर कालापानी, लिम्पियाधुरा समेटी नक्सा मात्रै भए पनि जारी गरेको छ तर भूगोल र त्यसअन्तर्गतका बस्ती एवं प्राकृतिक स्रोतउपर उसको हैकम कायम छ । यसमा उल्लेख गर्नलायक विषय यो छ कि नेपाल कूटनीतिकबाहेक अरु तवरमा उक्त जमिन आफ्नो हकाधिकारभित्र ल्याउन तत्कालै सक्दैन र सम्भव छैन । चीन भने नक्सामा मात्र सीमित रहने देखिँदैन । प्रश्न यहाँनेर उठ्छ- त्यो अवस्थामा नेपालले कस्तो नीति अख्तियार गर्ला ?

अब रह्यो चीन र भारतको विवादास्पद भनिएका भूमिको जड वास्तवमा के हो ? यी सबै विवाद बुझ्न एक शताब्दीअघिको ब्रिटिशकालीन भारत, तिब्बत र चीनको इतिहासतिर फर्कनुपर्ने हुन्छ । ब्रिटिश शासनकालमा देशको सीमा पश्चिममा चीनको सिनजियाङ, र तिब्बतसम्म स्पष्ट गर्न लामो समयदेखि अध्ययन अघि बढाइयो । यसैअनुरूप १८६५ मा जोन्सनलाइन कोरियो जुन कुनलुन रेञ्जदेखि काराकोरम पासतर्फको रेखा थियो । यसैगरी पछि १८९९ को म्याकार्टिन-म्याकडोनाल्ड लाइन जोन्सोनलाइनभन्दा केही दक्षिणमा पर्ने गरी कोरियो, जुन सीमारेखालाई १९५९ सम्म चीनले अनौपचारिक रुपमा मानेको पाइन्छ ।

सन् १९०४ मा तिब्बतमा रुसीहरूको प्रभाव बढेको भन्दै 'ग्रेट गेम' अन्तर्गत ब्रिटिशराजले गोरखा सैनिकसहित कर्णेल योङ्गहस्ब्याण्डको नेतृत्वमा तिब्बतउपर धावा बोल्यो । कमजोर तिब्बती सेनाको नरसंहार गर्दै ल्हासासम्म दखल गरी व्यापारिक सन्धिमा हस्ताक्षर गर्न बाध्य पारियो । त्यसपछि मूलतः नर्थ 'इष्ट फ्रण्टियर' अन्तर्गत पूर्वोत्तर भागमा सीमाको रुपरेखा कोर्न सन् १९१४ मा ब्रिटिश तिब्बत र चीनबीच सिमलामा बैठक आयोजना गरियो । पश्चिममा भुटानदेखि पूर्वमा ब्रह्मपुत्र नदी हुँदै बर्मासम्मको भागलाई काल्पनिक रेखांकन गरी त्यसबेला ब्रिटिश भारतका विदेश सचिव सर हेनरी म्याकमोहनको तर्फबाट ९८० किमी सीमाबारे प्रस्ताव पेश भयो । यसले तिब्बतलाई बाहिरी तिब्बत र भित्री तिब्बतको रुपमा समेत ब्याख्या गरेको कारण चीन यस सम्झौतामा हस्ताक्षर गर्न सहमत भएन । चीनका तत्कालीन प्रतिनिधि इभान चेनले हस्ताक्षर नगरी ब्रिटिश र तिब्बतले मात्र उक्त सम्झौतालाई अघि बढाए । यसरी उक्त सम्झौतामार्फत दुई ब्रिटिश र तिब्बतबीच कायम भएको म्याकमोहन लाइन १०९ वर्षपश्चात् पनि विवादमै छ ।

यसलगत्तै भारत ब्रिटिशबाट स्वतन्त्र भयो, दुई वर्षपश्चात् चीनमा कम्युनिष्ट शासन स्थापित हुन पुग्यो । सन् १९५० मा चीनले तिब्बत स्वामित्वमा लिएपश्चात् भारतको सीमा सिधै विशाल छिमेकी चीनसँग जोडिन पुग्यो । चीनले तिब्बत र पश्चिमी सुदूर राज्य सिनजियाङ जोड्ने गरी धमाधम बाटो बनाउने कार्यलाई तीव्रता दिँदै सन् १९५७ सिनजियाङ-तिब्बत रोड बनायो, जुन म्याकार्टिन- म्याकडोनाल्ड लाइनभन्दा उत्तर नै पर्ने भए पनि तत्कालीन काश्मिरअन्तर्गत भएको भन्दै, भारतले अक्साई चीन आफ्नो भूमि भएको र उक्त स्थानमा बाटो बनाएकोमा विरोध गर्दै आएको पाइन्छ ।

बर्मादेखि अफगानिस्तानी सीमासम्मको विशाल ब्रिटिश साम्राज्यले नै राजनीतिलगायत रक्षा, परराष्ट्र, आर्थिक सबै मामिला हेर्दै आइरहेको अवस्थामा स्वतन्त्रतापश्चात् विभाजन, शरणार्थीको ओइरो, दोहोरो नरसंहारजस्ता व्यवस्थापनमै भारतको ध्यान केन्द्रित भइरह्यो । देशको सीमाना एक प्रकारले ओझेलमा पर्न गयो । सन् १९५९/ ६० मा आएर मात्र उत्तर-पूर्वी फ्रण्टियर एजेन्सी (नेफा) लगायत देशको सीमामा सेना परिचालन गर्ने नीति अवलम्बन गरियो ।

सन् १९५४ मा भारत-चीनबीच शान्तिपूर्ण सहअस्त्वि र पञ्चशीलको सिद्धान्तमा हस्ताक्षर भयो । सोही साल चीनका प्रधानमन्त्री चाउएनलाई भारत आएर 'हिन्दी चिनी भाइ भाइ' भन्ने नारा गुञ्जायमान भयो । तर, सन् १९५९ सा चाउ एनलाईले पहिलोपटक लद्दाख र नेफाअन्तर्गत भारतको ४०,००० वर्गमाइलको भूमि चीनको भएको उद्घोष गरिदिए । सीमाको तनाव बढ्दै गयो । तिब्बती धार्मिक नेता दलाई लामा सन् १९५९ मा भारत निर्वासित भए । सोही साल अगष्टमा लेह लद्दाखको भारतीय आउटपोष्टमा आक्रमण भयो र अक्टोबरमा अक्साई चीनमा गएको भारतीय सैन्य गस्तीका नौ जना मारिए । १९६१ मा भारतका प्रधानमन्त्री नेहरूले चिनियाँ फ्रण्टियरमा 'फरवार्ड पोलिसी' लागू गर्दै चीनले कब्जामा लिएको भारतीय भूमि फिर्ता ल्याउने नीति अख्तियार गरे ।

सन् १९६२ मा आएर चीन र भारतबीच म्याकमोहन लाइनको विषयलाई नै लिएर युद्ध हुन पुग्यो । भलै यो पूर्वको तत्कालीन नेफा हाल अरुणाचल प्रदेशको नाम्का चु, बुम्ला, तवाङ, सेला, जाङ हुँदै बोम्दिलासम्म लडाइं भयो भने पश्चिम सेक्टरमा लद्दाख इलाकामा भयो । करिब एक महिनासम्म चलेको उक्त युद्धमा भारतमा कार्यरत करिब ७०० गोरखा सैनिकसहित ३९०० जना सेनालाई युद्धबन्दी बनाइयो । चीनले गरेको एकतर्फी युद्धविरामपश्चात् पूर्वी सेक्टरमा म्याकमोहन लाइनलाई करिब मानेको, पश्चिममा म्याकार्टिन- म्याकडोनाल्ड लाइनभन्दा दक्षिणसम्म चीन आएको र त्यहीँ हालसम्म दुवै सेनाको उपस्थिति रहेको देखिन्छ । चीनले भने अझै त्योभन्दा दक्षिणलाई आफ्नो दाबी गर्ने गरेको पाइन्छ ।

भारतले १९७२ मा नेफाको नाम परिवर्तन गरी अरुणाचल प्रदेश बनायो । यसै बीच दलाई लामाको २०१७ मा अरुणाचल प्रदेशको तवाङ भ्रमणपश्चात् चीनले अरुणाचल प्रदेशको ६ स्थानको नाम आफ्नो अनुकूल परिवर्तन गरेको थियो । यसरी भारत र चीनले विगतका करिब सात दशकमा सीमा क्षेत्रमा सैन्य गतिविधि तीव्र बनाउँदै गएको पाइन्छ । यसैबीच, दुवै देशका सेनाबीच बारम्बार झडप हुँदै आइरहेको छ । दुवै देशले सीमा क्षेत्रमा तैनाथ या सम्पर्क हुँदा हतियार प्रयोग नगर्ने नीति अख्तियार गर्दागर्दै पनि सन् २०१७ मा चीन भुटान भारतको ट्राइ जङ्सनमा डोक्लाम विवाद हुन पुग्यो भने अप्रिल २०२० मा लेह लद्दाखको गलवान क्षेत्रमा दुई सेनाबीच गुत्थमगुत्थाको झडपमा भारततर्फ बीस जना र चीनतर्फ चार जना सैनिकको ज्यान गयो । त्यसपछि चीनले अरुणाचल प्रदेशको २०२१ मा १६ स्थानको नाम आफू अनुकूल राखेको पाइन्छ ।

यसरी उतारचढावपूर्ण सीमा विवाद रहँदै आएको चीन र भारतको सम्बन्ध हालै आएर चीनले जारी गरेको नयाँ नक्सा भारतको अरुणाचल प्रदेश र पश्चिमको अक्साई चीनसमेत समेटेर जारी गरेपश्चात् सम्बन्धले नयाँ मोड लिने निश्चित छ । यो समस्यामा भारत र चीन मात्र नजोडिई नेपालसमेत तानिने देखिन्छ । किनकि भारतले समेत यसै गरी नेपालको भूगोल समेटेर नक्सा जारी मात्र गरेको छैन जमिनी आधिपत्यसमेत लिँदै आएको छ । अझ पछि आएर भारतको नयाँ संसद भवनमा राखिएको नक्सामा लुम्बिनीसमेत भारतअन्तर्गत पारिएको पाइन्छ । यसैगरी, नेपालले जारी गरेको चुच्चे नक्सा हाल चीनले जारी गरेको नयाँ नक्सामा नपरेकोमा नेपालले मन्द असन्तुष्टि मात्र प्रकट गरेको छ । बेला-बेलामा जुर्मुराउने राष्ट्रियताको अलाप माईतीघर मण्डलासम्म पनि आइपुगेको छैन । यदि, नेपालको कूटनीतिक दबाबमा चीनले चुच्चे नक्सा उल्लेख गरिदियो भने भारतसँगको सम्बन्धमा पनि असर पर्न जाने निश्चित छ । नेपालमा नक्सा जारी गर्दा मैले या हाम्रो पार्टीले गर्दा सम्भव भएको भन्ने तर भारतसँग स्पष्ट रुपमा कहिल्यै कुरा राख्न नसक्ने प्रवृत्ति जारी छ । यस्तो अवस्थामा दुई ठूला देशको भुमरीमा नेपाल पर्न सक्ने देखिन्छ । सन् १९७१ मा मात्र स्वतन्त्रता हासिल गरेको बंगलादेश विश्व रंगमञ्चअन्तर्गत ब्रिक्स र जि.२० सम्मेलनमा सहभागी हुनु तर कहिल्यै कसैको अधीनमा नरहेको नेपाल आमन्त्रित हुन नसकिएरहेको वर्तमान परिप्रेक्ष्यमा सुझबुझपूर्ण कूटनीतिक चातुर्यता, संयमता र दुवै देशको सम्बन्धलाई सन्तुलनमा राख्न नसकिएको खण्डमा नेपाल भूराजनीतिक चक्रब्युहमा नराम्ररी जेलिन सक्ने देखिन्छ ।

# माओवादीबाट को बन्लान् प्रधानन्यायाधीश ?

वि.सं. २०९२ सालसम्मका निम्ति प्रधानन्यायाधीशहरूको नियुक्ति भइसकेकोले त्यसपछिको पालो कसको आउला भन्ने खुल्दुली न्यायिक र राजनीतिक वृत्तमा मच्चिइरहेको छ । दिनमणि पोखरेल माओवादी वृत्तको आशलाग्दो व्यक्ति भएकाले पनि उनको नाम चल्नु अस्वाभाविक होइन तर उनलाई भावी प्रधानन्यायाधीशको रोलक्रममा सर्वोच्च अदालत छिरिहाल्न त्यति सजिलो भने छैन । उनी जनयुद्धताकाका कानुनी सल्लाहकार रामनाथ मैनालीका ज्वाइँ, कानुनमा पिएचडी होल्डर र वर्तमान सरकारको महान्यायाधिवक्ता हुन् र वि.सं. २०२९ सालको जन्ममिति भएकाले उनी नै माओवादीको पहिलो भावी प्रधानन्यायाधीश हुन सक्छन् भन्ने धेरैको अडकलवाजी छ ।

कांग्रेसबाट प्रकाश राउत, कुमार रेग्मीहरू प्रधानन्यायाधीशको रोलक्रममा बसिसकेको, एमालेबाट सपना प्रधान मल्ल, हरि फुयाँल तयारी अवस्थामा रहेकाले भावी माओवादी भन्ने खुल्दुली मच्चिइरहेको छ । कांग्रेसबाट अनुपराज शर्मा, सुशीला कार्कीहरूसमेत प्रधानन्यायाधीश बनिसकेका छन् भने एमालेबाट बनेका हरिकृष्ण कार्कीले अवकाश पाएको दुई महिना पनि पुगेको छैन । प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डले महान्यायाधिवक्तामा दिनमणिलाई ल्याउनुको कारण उनलाई भावी प्रधानन्यायाधीशको रूपमा प्रोजेक्ट गर्नु हो । 'त्यसैले वरिष्ठ अधिवक्ता रमण श्रेष्ठ र मुक्तिनारायण प्रधानलाई छाडेर उनको व्यक्तित्व विकास गर्न महान्यायाधिवक्तामा नियुक्त गरिएको थियो, ' स्रोत भन्छ, 'तर उनी यस्तो बेला न्यायपरिषद्को घानमा परेका छन् जहाँ प्रधानन्यायाधीश विश्वम्भरप्रसाद श्रेष्ठ र ईश्वरप्रसाद खतिवडा दुवै जना कसैको कुरा नसुन्ने प्रवृत्तिका छन् ।' स्रोतहरूका अनुसार दिनमणि वरिष्ठ अधिवक्ताको लाइसेन्ससम्म पाएको भए पनि सर्वोच्चको न्यायाधीशमा नियुक्ति पक्का हुन सक्थ्यो तर कांग्रेसबाट कानुनमन्त्री बनेका धनराज गुरुङ सकभर माओवादीलाई न्यायालय जिम्मा लगाइहाल्न त्यति उचित हुँदैन भन्ने मान्यता राख्दछन् । उनको सट्टा माओवादीबाट केही वर्षअघि उच्च अदालतमा नियुक्ति पाएकी राज्यलक्ष्मी बज्राचार्यलाई ल्याउन उनीहरू तयार छन् तर दिनमणिको शेखी झार्न पनि रमणहरू समेत कस्सिएको स्रोतको दावी छ ।

सर्वोच्च अदालतमा ६ पद खाली छन् कात्तिक २० मा अनिलकुमार सिन्हाको अवकाशपछि खाली हुने एक पद समेत पुर्ताल गर्दा न्यायालयमा अब कस्तो चमत्कार हुने हो हेर्न लायक छ । उच्च अदालतका ६ मुख्य न्यायाधीश र ३५ न्यायाधीशमा समेत कस्ता व्यक्ति छानिएलान् भन्ने विषय पनि कौतुहलमय बनेको छ ।



## विश्वको सेरोफेरो

राजेन्द्र स्थापित



# यातना शिविरकी ती सुन्दरी



फ्रान्सी राबिनेकको जन्म तत्कालीन चेकोस्लोभाकियामा भएको हो । उनकी आमा राजधानी प्रागमा सैलुन चलाउँथिन्, फेसन र बुटिकको काम पनि गर्थिन् । बाबु इलेक्ट्रिकल इन्जिनियर । जब उनी पेटमा थिइन्, बाबुले स्वास्नीलाई गर्भ गिराउन दबाब दिए । फेरि छोरी जन्माउने डरले । तर, आमाचाहिँ मानिनन् । छोरीको जन्मपछि भने बाबुको मन बदलियो । छोरीका लागि कहिले के, कहिले के विद्युतीय सामग्री ल्याएर दिन थाले । फ्रान्सीले कलेज पढ्दापढ्दै फेशन डिजाइनको काम सिकिन् अनि १८ वर्षकै उमेरमा आमाको सैलुन सम्हालिन् । स्कि खेल्थिन् अनि नृत्य पनि गर्थिन् ।

सन् १९३२ मा जर्मनीमा नाजी पार्टी सत्तारुढ भएसँगै एडोल्फ हिटलरको महत्वाकांक्षा ह्वात्तै बढ्यो । उनले छिमेकी मुलुकमाथि गिद्दे दृष्टि लगाउन थाले । र, सन् १९३८ मै चेकोस्लोभाकियाको कतिपय भूभाग कब्जा जमाउन सफल भए । सन् १९३९ को मार्चसम्म प्रागलगायत सबै भूभाग जर्मनीको कब्जामा गयो । सन् १९४० मा २० वर्षको उमेरमा फ्रान्सीको बिहे एक जना उत्साही यहुदी युवक जोए सोलारसित भयो । लगत्तै अर्को वर्षको शुरुवातसँगै जर्मन सेनाले यहुदीहरूलाई समात्दै यातना शिविरमा पठाउन थाल्यो । यसै क्रममा फ्रान्सी र आमाबुबा पनि पक्राउ परे किनभने उनीहरू पनि यहुदी थिए । उनीहरूलाई थेरेसिस्टाडमा पठाइयो । थेरेसिस्टाडमा जर्मन सेनाले सैन्य शिविर खडा गरी वरिपरि यस्तो एउटा गाउँ बसाल्यो, जहाँ अन्यत्रबाट पक्राउ गरी ल्याइएका गरिब यहुदीलाई राखिन्थ्यो । त्यहाँ राखिएका ८८ हजार यहुदीमध्ये ३३ हजारको मृत्यु भोकमरी र विभिन्न रोगका कारण भयो भने बाँकीलाई अन्तै सारियो । पछि फ्रान्सीलगायत धेरैलाई नयाँ बसालिएको सोही गाउँमा राखियो । आमाबुबालाई चाहिँ सोभियत संघको मिन्स्क नजिकको मेली ट्रोस्टिनेटको शिविरमा पठाइयो, जहाँ उनीहरूको हत्या गरियो ।

यातना शिविरसहितको उक्त गाउँमा बस्दा फ्रान्सीले सिलाइको काम पाइन् । त्यसै पनि सधैँ चिसो मौसम हुने स्थान, कठ्यांग्रिने जाडोमा बाक्लो लुगा र सिरकको अभावमा धेरैले ज्यान गुमाए । फ्रान्सीले भने सिलाइको काम अरुलाई सिकाउने र खाना बनाउने कला अरुबाट सिकिन् । सीप जानेकै कारण खुँखार जर्मन सैन्य डाक्टर जोसेफ मेंगेलबाट पनि बचिन् । मेंगेल अमानवीय तरिकाले कैदीमाथि चिकित्सकीय परीक्षण गर्थे । जिउँदै चिरफार गर्थे । हानिकारक रसायनको सुइ दिन्थे । जथाभावी गरिने उनको परीक्षणले कत्तिको तत्काल ज्यान जान्थ्यो, कोही पागल हुन्थे, कोही नपुंसक त कसैको अंगभंग हुन्थ्यो । मेंगेलले आफ्नो परीक्षणका लागि सबै कैदीलाई नांगै उभिन लगाउँथे । एउटा परीक्षणको क्रममा फ्रान्सी पनि अरुसरह नांगै उभिन पुगेकी थिइन् । मेंगेलले कसैलाई विभिन्न काम गराउने त कसैलाई मार्ने उद्देश्यले कैदीको छनोट गर्दै गए । यसरी नांगै उभिन लगाउनुको एउटा मुख्य कारण शरीरमा दाग भएको कैदी उनलाई मन नपर्नु हो । फ्रान्सीले यो कुरालाई ध्यान दिइन् । उनको शरीरमा पनि एपेन्डिक्सको शल्यक्रिया गर्दाको दाग थियो । जब मेंगेल नजिक पुगे, उनले जसोतसो आफ्नो दाग लुकाउन सफल भइन् ।

मेंगेलले बोलाए- नम्बर ए-४११६ अगाडि आऊ । जब फ्रान्सी अगाडि छाती फुलाएर उभिइन् मेंगेलले फेरि सोधे 'उमेर ?'

फ्रान्सी- '२४' ।

मेंगेल- विवाहित ?

फ्रान्सी - 'हो'

मेंगेल - 'पेशा ?'

फ्रान्सी - 'इलेक्ट्रिसियन'

मेंगेलले आश्चर्य मान्दै फेरि सोधे 'सत्य हो ? तिमी तार जडान गर्न सक्छौ ?'

फ्रान्सी -'सक्छु ।'

आफ्नो पेशालाई चलाखीपूर्ण ढंगले ढाँट्न सकेकै कारण उनको ज्यान बच्यो । शिविरमा इलेक्ट्रिसियनको अभाव थियो । जसकारण उसको छनोट श्रमशिविरका लागि भयो । र, नेउग्राबिनस्थित शिविरमा सरुवा भयो । जहाँ उनले दुई वर्ष इलेक्ट्रिसियनको काम गरिन् । नेउग्राबिन उपशिविर हो, जुन चेक महिला कैदीकै लागि बनाइएको थियो । फ्रान्सीले ३ वर्षभन्दा बढी समय यातना शिविरमा बिताइन्, त्यो पनि एक, दुई होइन, ६ वटा शिविरमा । त्यसैले उनले थुप्रैलाई साथी बनाउने अवसर पाइन् । तीमध्येकी किट्टी भोहरिजेक पनि हुन् । पछि उनीहरू निकै मिल्ने साथी बने । सन् १९४५ मा दुवै जना उत्तरी जर्मनीस्थित बेर्गेन बेल्सेन क्याम्पमा थिए । १५ अप्रिलमा ब्रिटेनको सेनाले यसलाई मुक्त पार्‍यो । त्यतिखेर फ्रान्सी टाइफाइडबाट सिकिस्त बिरामी थिइन् । मुक्तिपछि उनलाई बेलायती अस्पताल पठाइयो । स्वस्थ भइसकेपछि उनले त्यहीँ काम पाइन् । बेलायती सेना उक्त शिविरमा पस्दा भित्र करिब ४० हजार कैदी मृत्युको नजिक थिए भने १३ हजार त गाड्न बाँकी लाश नै थियो । भित्र न ढलको व्यवस्था थियो न त खानेपानीको ।

रिहाइपछि उनले यातना शिविरमा बस्दाको स्मरण गर्दै पुस्तक लेखिन्- 'फ्रान्सीको युद्ध' । जसमा उनले लेखेकी छन्, 'शिविरभित्र खुलेआम समलिंगी यौन सम्बन्ध चलेको हुन्छ । सुन्दर नारीले या त बलात्कारको शिकार बन्नुपर्छ, यौन सम्बन्ध राख्न आनाकानी गर्नेले मर्न तयार हुनुपर्छ । सेक्सको स्वच्छन्दता र यौन हिंसाको त कुरो गरिसाध्य छैन । यसको बाबजुद यौन हिंसाको शिकार बनेकाहरूले न कसैलाई आफ्नो व्यथा सुनाउँछन् न आपसमै यसबारे कुरो गर्छन् किनभने उनीहरू आफूहरूमाथि भएको यौन कार्य भविष्यमा आफ्ना छोराछोरी र नातिनातिनाले थाहा नपाउन् भन्ने चाहन्छन् । त्यसो त फ्रान्सी र किट्टीबीचको सम्बन्ध पनि शिविरभित्र चर्चाको विषय हुने गर्थ्यो । उनीहरूकै अग्रसरतामा शिविरभित्रको एकान्त कुनामा 'कुम्बलस' निर्माण भयो । जहाँ युवाहरूबीच सेक्ससम्बन्धी कुरो गर्न सकियोस् र यौन सम्बन्ध पनि राख्न मिलोस् । फ्रान्सीले शिविरमै हुँदा जोएलाई पनि जर्मन गुप्तचर प्रहरी 'गेष्टापो' ले पक्रेर थुनेको र उनको मृत्यु त्यहीँ भएको थाहा पाइन् । त्यसो त फ्रान्सीले पक्राउ पर्नुअगावै आफूहरूको सम्बन्धविच्छेद भइसकेको र बरु शिविरभित्रै एक जना १७ वर्षीय युवकसित नजिकिएको लेखेकी छन् । उक्त युवकसित उनले 'जंगली प्रेम' गरेको पनि उल्लेख गरेकी छन् । जर्मनीको हुम्बर्गस्थित डेस्साउएर उफेर क्याम्पमा रहँदा पनि उनको एक जना इटालियन कैदीसित प्रेम भएको, उक्त कैदीले घरबाट आफूलाई पठाउने खानेकुरो फ्रान्सीलाई पनि दिने गरेको तर उनीसित कहिल्यै यौन सम्बन्ध नराखेको दाबी गरेकी छन् । फ्रान्सी युद्धको समाप्तिपश्चात् आफ्नो देश चेकोस्लोभाकिया नै फर्किन् । उनले प्रागस्थित सैलुन फिर्ता लिने कोसिस गरिन् । आफ्ना पुराना ग्राहकसित मद्दत मागिन् तर पाइनन् । स्वदेश फर्केको केही समयमै कुर्त इप्सटाइनसित बिहे गरिन् । कुर्त फ्रान्सीका पूर्व पौडी प्रशिक्षक थिए । उनी वाटर पोलोमा २ पटक ओलम्पिक स्वर्ण विजेता पनि हुन् । उनी पनि यातना शिविरबाट फर्केका कैदी थिए । वर्ष दिनपछि फ्रान्सीले एउटी छोरी जन्माइन् -हेलेन ।

सन् १९४८ को फेब्रुअरी २५ मा सोभियत संघको सहयोगमा चेक कम्युनिष्टहरूले सत्तामा कब्जा जमाए । एप्सटाइन दम्पती कम्युनिष्ट शासनमा बस्न नसकेर अमेरिका पलायन भए । र, न्युयोर्कमा बस्न थाले । उनको निधन सन् १९८९ मा मस्तिष्कको नशा फुटेर भयो । उनकी छोरी हेलेन यतिखेर म्यासाचुसेट्समा बस्छिन् । लेखिका हुन् । न्युयोर्क विश्वविद्यालयमा पत्रकारिता पढाउँछिन् । उनले २० वर्षकै उमेरदेखि पत्रकारिता थालेकी हुन् । उनले त्यही बेला 'जेरुसेलम पोष्ट' मा 'चेकोस्लोभाकियामा सोभियत हस्तक्षेप' शीर्षकको लेख छपाएकी थिइन् । पुस्तक पनि लेखेकी छन्- 'यातनाशिविरका केटाकेटी' ।

# शरणार्थी हिँडेपछि क्याम्प रित्तै

प्राकृतिक सौन्दर्यले भरिपूर्ण रसुवाको गोसाइँकुण्ड पर्यटकीय गन्तव्य हो । प्रसिद्ध धार्मिकस्थल गोसाइँकुण्ड अवलोकन गर्न बर्सेनि लाखौं पर्यटक पुग्ने गर्छन् । जनैपूर्णिमाको दिन त त्यहाँ भक्तजनको चाप थेगिनक्नु हुन्छ । हिन्दू धर्मावलम्बीको पवित्रस्थल गोसाइँकुण्डमा स्नान गर्दा पाप पखालिने र पुण्य कमाइने जनविश्वास छ । प्रत्येक वर्ष साउन शुक्ल पूर्णिमामा त्यहाँ मेला लाग्ने गर्छ । गोसाइँकुण्ड गाउँपालिका-५ बाट चार हजार ३८० मीटर उचाइमा रहेको गोसाइँकुण्डमा लागेको यस वर्षको जनैपूर्णिमा मेला समाप्त भइसकेको छ । सो अवसरमा लाखौं भक्तजनले गोसाइँकुण्डको भ्रमण गरेका थिए ।

वडा नम्बर ५ को लौरीबिनायक र बुद्ध मन्दिरबीचको इलाकामा तीर्थालुको सहजताका लागि छाप्रो (थुर्पु) बनाइएको थियो । गोलभेंडा खेतीका लागि प्रयोग हुने टनेलजस्तो देखिने छाप्रो तीर्थालुको थकाइ मार्ने थलो बन्यो । झण्डै डेढ दर्जन छाप्रो सामान्य त्रिपालको प्रयोग गरेर बनाइएको थियो । यता, 'संयुक्त राष्ट्रसंघ मानवअधिकार उच्चायोग' को कार्यालयले तिब्बती शरणार्थीलाई वितरण गरेको त्रिपालबाट निर्मित दुई वटा छाप्रोमा 'युएनएचसीआर' लेखेको फेला पर्‍यो । यसले त्यहाँ तिब्बती शरणार्थीको बसोबास छ भन्ने त स्पष्टै देखाउँथ्यो । तर, त्यहाँस्थित तिब्बती शरणार्थीको पुनर्वास क्याम्प नै रित्तिसकेको पाइयो । रोजगारीको खोजीमा तिब्बतीहरू विभिन्न ठाउँ गएपछि क्याम्प खाली भएको वडा नम्बर ५ का वडाध्यक्ष दावा मिङ्मार तामाङले बताए । उनका अनुसार हाल एक जना वृद्ध मात्रै सो क्याम्पमा बस्दै आएका छन् ।

७० वर्ष कटिसकेका पासाङ लामा श्रीमतीको निधनपछि एक्लिएका हुन् । उनले डोको बनाएर जीविकोपार्जन चलाउँदै आएका छन् । त्यस्तै, स्यार्पो बजारमा दुई जना तिब्बती शरणार्थीको बसोबास छ । झयाङ्जु लामा र लोपसन लामाले बजारमा पसल सञ्चालन गरिरहेको वडासचिव जंगे तामाङले बताए । 'तिब्बती शरणार्थीको क्याम्प रित्तिसकेको छ । पहिले छोराछोरी कामका लागि विभिन्न जिल्ला गएका थिए । पछि त उनीहरूले बुवाआमालाई पनि लिएर गए । श्रीमती नेपाली भएकाले दुई जना तिब्बती शरणार्थीले जग्गा किनेर घर बनाएका छन् । त्यहीं पसल थापेर बसेका छन्,' उनले भने ।

**क्याम्प खाली, उद्योग बन्द**

नेपालस्थित एक दर्जन तिब्बती शरणार्थी पुनर्वास केन्द्रमध्ये रसुवामा रहेको पनि एक हो । सन् १९६८ मा नेपाल रेडक्रस सोसाइटीले साविकको स्यार्पो गाविस-१ मा 'गाईगाईलिङ रिसेटल क्याम्प' स्थापना गरेको थियो । नेपालस्थित शरणार्थीका लागि संयुक्त राष्ट्र सङ्घीय उच्चायोगको तथ्यांकअनुसार कूल १३ हजार ५१४ शरणार्थीमध्ये रसुवामा २०१ रहेका छन् । २०७२ वैशाख १२ गते आएको महाभूकम्पले त्यहाँ ठूलो क्षति पुर्‍यायो । त्यसपछि उनीहरू रोजगारीका लागि विभिन्न जिल्लातिर छरिएका छन् । वडासचिव तामाङका अनुसार अधिकांश बिदेशिइसकेका छन् । उनीहरूले क्याम्पमा कार्पेट उद्योग सञ्चालन गरेका थिए, जुन हाल बन्द छ । शरणार्थीहरू हिँडेपछि क्याम्प सुनशान छ ।

**विद्यार्थीको अभावमा विद्यालय बन्द**

तिब्बती शरणार्थीका सन्तानले अध्यापन गर्दै आएको स्यार्पो विद्यालय बन्द अवस्थामा छ । 'स्नो लायन फाउण्डेशन' द्वारा आर्थिक सहयोगमा सञ्चालित स्कूल भूकम्पले ध्वस्त बनाएको थियो । हाल विद्यार्थीको अभावका कारण बन्द छ । उक्त स्कूलमा अध्ययनरत ३७ जना विद्यार्थीलाई काठमाडौंको स्वयम्भूस्थित न्यामग्याल मिडल स्कूलमा भर्ना गरिएको छ ।

## • हनुमानलाई बुझाउन सेनाको हतारो

नेपाली सेनाले काठमाडौं-निजगढ फास्ट ट्र्याकको प्राविधिक मूल्यांकन कार्य भदौ अन्तिम साता सकाएको छ । २४ गतेको फास्ट ट्र्याक टेक्निकल इभ्यालुएसनबाट तीन वटा प्याकेज छनोट गरिएको छ । प्याकेज ८ 'ए' मा चार वटा कम्पनी, प्याकेज नम्बर ९ 'ए' मा तीन वटा कम्पनी र प्याकेज ९ 'बी' मा तीन वटा गरी १० वटा कम्पनीलाई छानेको बताइएको छ । जसअनुसार ८ 'ए' मा जियाङसी-हनुमान-दिवा जेभी (हनुमान कन्स्ट्रक्सन प्रालि, जियाङसी कन्स्ट्रक्सन इन्टरनेशनल इञ्जिनियरिङ कम्पनी लिमिटेड, दिवा निर्माण सेवा प्रालि, ललितपुर एउटा रहेको छ ।

अर्को समूहमा बज्रगुरु कन्स्ट्रक्सन कम्पनी प्रालि, विष्णुप्रकाश आर पुङलिया लिमिटेड छन् भने तेस्रोमा अमर कन्स्ट्रक्सन प्रालि, बेइजिङ केली हाओजिङ टेक्नोलोजी डेभलपमेण्ट कम्पनी लिमिटेड कालीमाटी काठमाडौं छन् । त्यसैगरी, ८ 'ए' का लागि चौथोमा भीमेश्वर ड्रिलिङ तथा निर्माण सेवा प्रालि, लङचियान रोड एण्ड ब्रिज कम्पनी लिमिटेड, अनामनगर काठमाडौं समावेश भएको बताइन्छ । प्राप्त विवरणअनुसार ९ 'ए' को प्याकेजमा अफकोन्स इन्फ्रास्ट्रक्चर लिमिटेड, मुम्बई एउटा, बेइजिङ केली हाउजिङ टेक्नोलोजी डेभलपमेण्ट कम्पनी लिमिटेड, सि.ए.बी कन्स्ट्रक्सन प्रालि, अमर कन्स्ट्रक्सन प्रालि अर्को र हनुमान कन्स्ट्रक्सन प्रालि, चियाङसी कन्स्ट्रक्सन इन्टरनेशनल इञ्जिनियरिङ कम्पनी लिमिटेड, बानियाँ निर्माण सेवा प्रालि ललितपुरले आवेदन गरेका छन् ।

त्यस्तै ९ 'बी' प्याकेजमा हनुमान-बानियाँ जेभीअन्तर्गत हनुमान कन्स्ट्रक्सन, सिन्पाङ कन्स्ट्रक्सन ग्रुप कम्पनी लिमिटेड र बानियाँ निर्माण सेवा प्रालि ललितपुर छन् । आवेदक अर्को समूहमा बज्रगुरु कन्स्ट्रक्सन कम्पनी प्रालि र विष्णु प्रकाश आर पुङलिया लिमिटेड छन् । त्यसैगरी गौरी पार्वती निर्माण सेवा प्रालि, जियाङ्सी कन्स्ट्रक्सन इन्जिनियरिङ ग्रुप कर्पोरेशन लिमिटेड देखिएका छन् । यी सबै प्याकेजमा हनुमान कम्पनीलाई टेक्निकल इभालुएसनमा उत्तीर्ण गराइएको छ । जबकि हनुमान कम्पनीले एक पाइलो सडक बनाएको रेकर्ड छैन । सेनाभित्रका सबै इञ्जिनियरको मिलेमतोमा हनुमानलाई इभालुएसनमा पास गराइएको आरोप लागेको छ । सैन्य स्रोत भन्छ, 'नेपाल आर्मीका धेरैजसो इञ्जिनियर, कतिपय वकिल र लेखापाल हनुमानकै तलब खाएर बसेका छन् ।'

उच्च स्रोतका अनुसार सेना प्रमुखलाई समेत हनुमानको प्रस्ताव सबै प्याकेजमा पास हुने संकेत टेण्डर फ्लोटपछिको दुई हप्तामै भएको बताइन्छ । तर, उक्त गम्भीर विषयलाई नजरअन्दाज गर्दै तीन वटै प्याकेजमा हनुमानलाई पास गराइयो । उनै रक्षा मन्त्रालय कुदिरहने मेजर सन्दीप अर्यालको हालैको कुरालाई सापटी लिने हो भने 'नयाँ रिभ्यु बोर्ड बस्दै छ' । बोर्ड बैठक सुदीपकै पहलमा हुन लागेको गाइँगुइँ छ ।

आगामी बैठकमा कालिका र मोतिदनलाई पनि प्रतिस्पर्धामा राख्नको निम्ति आवश्यक पहल भइसकेको बताइन्छ । सुदीपले आफ्ना पुराना पार्टनर कर्नेल विश्वबन्धु पहाडीलाई रिभ्यु बोर्डको हर्ताकर्ता बनाएका छन् । उनी स्लोप प्रोटेक्सनको बेला प्रतिशतको आधारमा ठूलै रकम कुम्ल्याउने विकास पोखरेलका खास हुन् । सेनाको एमआई १७ हेलिकोप्टर खरिद गर्ने क्रममा सुदीपले जनार्दन शर्मा अर्थमन्त्री हुँदा निकै ठूलो पहल गरेका थिए । पर्दापछाडि रहेका दीपक भट्टमार्फत उक्त हेलिकोप्टर खरिद गरिएको थियो ।

मेजर अर्यालको घर स्याङ्जा हो भने पहाडीको कास्की । जनार्दन शर्मासँग सुदीपको पछिल्लो सम्बन्ध र संकटकालदेखिकै सम्बन्ध तथा स्लोप प्रोटेक्सनमा मुक्ति शर्मालाई सेटिङ मिलाएको सन्दर्भ पनि अहिले उठ्न थालेको छ । यस्तो अवस्थामा मेजर अर्यालले रिभ्यु बोर्ड आफ्नै पहलमा राखिएको भन्नु संयोग मात्र नहोला । कानुनतः सेनामा रिभ्यु बोर्ड राख्न पाइन्छ । तर, प्रधानसेनापतिको सहमतिबिना यस्तो बोर्ड बस्नै नसक्ने अवकाशप्राप्त जर्नेलहरू बताउँछन् । पहिले अरुले भनेको र अहिले सुदीपले बोलाएको बैठकलाई एकै ठाउँमा राखेर हेर्दा बाघ कराउनु र बाख्रा हराउनुको सन्दर्भसँग मेल खाएको देखिन्छ ।

एकताका जर्नेल सोवेन्द्रसिंह महतले प्रधानसेनापति प्रभुराम शर्माप्रति चर्को प्रतिक्रिया जनाउँदै 'बाहुन सेनापति हुनु हुँदैन' भनेका थिए । यी सबै घटनाक्रमले उहाँको समय समयको फलोअप उपचारको चाँजोपाँजो, फास्ट ट्र्याकका ठेकेदारसँगको भेटघाटलाई शंकाको दृष्टिकोणले हेर्नुपर्ने बाध्यता आइपरेको कतिपयको आरोप छ ।

एमसिटिसी अर्थात् मास क्याजुअल्टी ट्रिटमेण्ट सेन्टर, छाउनीमा हस्पिटल बनाउने ठेक्का नेपाली सेनाको कल्याणकारी कोषको रकमबाट गरिएको हो । उक्त प्रक्रियामा ईपीसी मोडलबाट काम गरेको कार्यअनुभव मागिएको थियो । तर उक्त अनुभवको प्रमाण विशाल पण्डितको कम्पनी इजी इन्फ्रास्ट्रक्चरले आफ्नै बसेरा होटलमा बसेर बनाएको आरोप लागेको छ ।

आफ्नै कम्पनीलाई अनुभवको प्रमाणपत्र दिलाएर सोही आधारमा इजी इन्फ्रास्ट्रक्चरलाई ठेक्का दिन सेटिङमा ईपीसी शर्त राखिएको सहजै अनुमान लगाउन सकिन्छ । सैन्य नेतृत्वलाई समेत उक्त गैरकानुनी कार्यको जानकारी हुँदाहुँदै टेण्डर फ्लोट गरिएको थियो । मूल्याङ्कन समितिले स्वार्थ बाझिएको उल्लेख गर्दै सिफारिस गरेपछि विशाल पछाडि परेका थिए । तर, आफूले उक्त ठेक्का पाउनुपर्ने प्रशस्त आधार रहेको उल्लेख गर्दै उनले पिपिएमओमा उजुरी हाले । यी सबै सेटिङमा उनलाई सेना प्रमुख शर्माका सालो डा.सुधीर रेग्मी र जर्नेल अशोक सिग्देलले धाप मारेको बताइन्छ । मूलतः विशाल मेडिकल माफियाका रुपमा परिचित छन् । उनीसँग आफ्नो होटलबाहेक हालसम्म ठूलो भौतिक संरचना बनाएको कुनै अनुभवसमेत छैन ।

*- देखीजान्नेहरू*




# खाने ओखतीमा यतिसम्म खतरा

मोहनबहादुर बस्नेत स्वास्थ्य तथा जनसंख्या मन्त्री बनेको धेरै समय बितेको छैन, सरुवा आतंकको सीमा नै छैन । हालै उनले स्वास्थ्य सेवा विभागका महानिर्देशक डा. दिपेन्द्ररमण सिंहलाई मन्त्रालयमा तानेर फार्मेसी अनुगमन गर्न तम्सिए । तर काठमाण्डौ उपत्यकाका सडकतिरै खोलिएका फार्मेसीको अनुगमनले मात्र नतिजा आउँदैन ।

बर्दिया जिल्लाको गेरुवा गाउँपालिका मनाऊ स्वास्थ्यचौकीमा ३४ वर्षदेखि कार्यरत अहेब (हाल सिअहेव) राजेन्द्रप्रसाद साहको फार्मेसीको अनुगमन गरे पुग्छ । बिहान ११ बजेसम्म आफैं सञ्चालन गर्छन् । नजिकैको स्वास्थ्य चौकीमा हाजिर जनाउँछन्, त्यसपछि ल्याब असिष्टेण्ट कोर्ष अध्ययन गरेका लक्ष्मी प्रसाद चौधरीले सञ्चालन गर्छन् ।

दुवैले फार्मेसी कोर्ष अध्ययन गरेका छैनन् । बालबालिकालाई झोल औषधी ५ मिली चाहिनेमा ७.५ मिलि, चक्की चाहिँ १ वटा चाहिनेमा १.५ चक्की दिन्छन् ।

राजेन्द्र साह (धनुषा घर र परिवार छोडेर बर्दियामा अर्को बिहे) को १० बिघा जमिन र दुई वटा (बर्दिया- काठमाण्डौ चल्ने) रात्री बस छन् निजी गाडी पनि किनेका छन् । जनताको स्वास्थ्य सेवामा अहेब वा सिअहेबले यत्तिका सम्पत्ति कसरी आर्जन गर्न सक्छ ?

अर्घाखाँची जिल्लाको शीतगंगा नगरपालिका, पाणिनी गाउँपालिकामा सञ्चालित मुक्तिराम न्यौपानेको अर्को मेडिकल हल अनुगमन गरे पुग्छ ।

यस्ता गलत क्रियाकलाप हुँदा कानमा तेल हालेर बस्ने प्रणालीले संविधानप्रदत्त निशुल्क, स्वास्थ्य सेवाको सबैमा पहुँच कसरी पुग्ला ? दुई चारबटा फार्मेसीको अनुगमन गर्दैमा बिग्रिसकेको स्वास्थ्य प्रणाली सुध्रन सक्दैन । स्वास्थ्य तथा जनसंख्या मन्त्रालयअन्तरगत निर्देशक बद्रिबहादुर खड्काले सरकारी गाडी निजी प्रयोजनमा चलाएका छन् भने महिनाको ६० लिटर तेलसमेत लिएकै छन् । हाल बागमती प्रदेशको स्वास्थ्य सचिव पदमा कार्यरत छन्, प्रदेशको सरकारी गाडीसमेत प्रयोग गर्दै आएका उनीसँग स्वास्थ्य मन्त्रालयको गाडी छँदैछ ।

राष्ट्रिय स्वास्थ्य तालिम केन्द्रका निर्देशक मोहम्मद दाउद सेवा निवृत्त भएको ६ वर्षजति भयो । तर उनले पनि तालिम केन्द्रको सरकारी गाडी र इन्धन प्रयोग गर्दै आएका छन् । उनले सरकारी सवारी साधन नबुझाई पेन्सनपट्टा कसरी पाए ?

दुर्गम क्षेत्रमा वर्षौंदेखि सेवा पुर्‍याउने स्वास्थ्यकर्मीको कुनै मूल्यांकन छैन । भ्रमण आदेश काटिन्छ, भत्ता भुक्तानी हुन्छ । स्वास्थ्य सेवा ऐनमा दुई वर्ष दुर्गममा काम गर्नासाथ सुगमतिर सरुवा गर्ने स्पष्ट व्यवस्था छ, तर कार्यान्वयन छैन, यदि यो व्यवस्था लागू गर्ने हो भने पनि स्वास्थ्य सेवा प्रणालीमा सुधार हुन्थ्यो । स्वास्थ्यकर्मी प्रोत्साहित भई काम गर्थे । स्वास्थ्य सेवा विभागको व्यवस्थापन महाशाखाका डा. सुरेन्द्रप्रसाद चौरसिया, स्वास्थ्य शिक्षा सञ्चार केन्द्रका डा. भक्तबहादुर केसी जहाँको त्यहीं छन् । स्वास्थ्य बिमा बोर्डको हालत दिनानुदिन बिग्रँदो छ । कार्यकारी निर्देशक दामोदर बसौला जनस्वास्थ्य तथा बिमा कार्यक्रमका ज्ञाता भएको कारणले कार्यकारी निर्देशक भएका त होइनन् ।

## • पशुपतिनाथ काण्डमा को को पेलिँदै

पशुपतिनाथको शिवलिंगमा राखिएको जलहरी प्रकरण फेरि चर्किएको छ ।

सुन जोख्दा विधि र प्रकृया नपुगेका कारण त्यहाँ नयाँ लफडा शुरु भएको हो । अख्तियारले जोख्दा पनि आधा किलो एक किलो कम देखिएको थियो । त्यति धेरै सुन गाल्दा, चुडिँदा, जर्दी काट्दा केही न केही सुन घट्नु स्वाभाविक हो । तर, कतिपय काम प्रक्रियासंगत नहुँदा दुई-चारजनालाई मुद्दा चलाउने तयारी भइरहेको छ ।

उनीहरूले ज्यालामा वा अन्य कतै गडबड गरेको आशंका छ । जलहरी जडानका क्रममा क-कसले दान दिए, त्यसको अभिलेख छैन । त्यसैले यस्तै प्राविधिक विषयमा विधि नपुर्‍याएको कारण भनेर दुईचार जना मुछिने खतरा बढेको हो । यसमा पूर्वसदस्य सचिव प्रदीप ढकाल, अहिलेका सदस्य सचिव मिलन थापा, उपेन्द्र बाराही (बाँडा), परिषद्का पूर्वसदस्य भगवतीप्रसाद देव, यस्तै तालाचाबी राख्ने अरुणकुमार श्रेष्ठहरूको नाम आएको छ । उनीहरूले जिन्सी, सुनचाँदी राख्ने गरेका थिए । उनीहरूमाथि अख्तियारले दुई-तीन पटकका दरले सोधपुछ गरिसकेको छ ।

पछिल्लो समय सदस्य सचिव मिलन थापाले कोषको लेटरप्याडमै स्पष्टिकरण लेख्दै अख्तियारका मान्छेले पैसा मागेको, यदि न्याय नपाए जलहरीमै गएर आत्महत्या गर्नेजस्ता चोरको खुट्टा काट्ने कुरा लेखेका छन् । त्यस्तो कुरा लेखेपछि अख्तियार उनीसँग झन् बिच्किएको छ । भनिन्छ, प्रधानमन्त्री, मन्त्रीले भनेपछि जे पनि गरिहाल्ने कारणले गर्दा यो समस्या आइरहेको बुझ्न सकिन्छ ।

यो काम गर भनेर आदेश दिने प्रधानमन्त्री, राष्ट्रपतिहरू पदावधि सकेर बाटो लागिसके । अहिले सबै कोट्याउदै जाँदा विधि पुगेन, प्रकृया पुगेन भन्ने नाममा कर्मचारी र पदाधिकारी पर्ने नै भए ।

*- भैरवकान्त वैद्य*

# गुरुबर, हामी थोत्रा भयौं कि भएनौं ?

– प्रा. डा विद्यानाथ कोइराला, शिक्षाविद्



विचारधाराले कम्युनिष्ट होइनन् तर बोली र व्यवहारमा क्रान्तिकारी भनिएकाहरूलाई समेत माथ खुवाउने गुरु हुन्- विद्यानाथ कोइराला । सार्वजनिक फोरमहरूमा यस्तै विचारधाराका कारण कसैले उनलाई माफियाको आरोप लगाउँछन्, कोही राजावादी भन्छन्, डलर पचाउनका लागि बोलिस् भनेर गाली गर्नेहरू पनि भेटिन्छन् तर यी गालीबाट किञ्चित विचलित छैनन् । यो मुलुकमा कसैले आमूल परिवर्तन गर्न सक्छ भने शिक्षकले मात्र सक्छ भन्ने धारणा राख्दै आएका उनी त्रिभुवन विश्वविद्यालयमा लामो समय प्राध्यापनपछि ०७२ सालदेखि अवकाशको जिन्दगी बिताइरहेका छन् । संविधान जारी भएको आठ वर्षपछि सरकारले संसदमा शिक्षा विधेयक दर्ता गराएसँगै नेपाल शिक्षक महासंघको अगुवाइमा तीन दिनसम्म सामुदायिक विद्यालयका गुरुहरू आन्दोलनमा होमिए । सात बुँदे सम्झौतापछि उनीहरू पूर्ववत् पठनपाठन कर्ममा फर्किसकेका छन् । त्यही विधेयकमा निजी विद्यालयलाई २० वर्षमा गुठीमा लैजाने, सहकारीमा परिणत गर्ने बुँदा हालिएको थियो तर स्कुल सञ्चालकहरूको एकदिने आन्दोलनबाटै उक्त बुँदा हटेको छ । शिक्षा ऐन र शिक्षकहरूको आन्दोलनलाई शिक्षाविद् विद्यानाथ कोइराला कसरी हेर्दैछन् त ? जनआस्थाले केही सवाल गरेको छ ।
*– हरि गजुरेल*

*० संविधान जारी भएको आठ वर्षपछि बल्ल शिक्षा विधेयक संसदमा दर्ता हुनु र शिक्षकहरूको तीन दिने आन्दोलन चल्नुलाई कसरी लिनुहुन्छ ?*

- कम्युनिष्ट नेतृत्वको सरकारले यसमा गोप्यता राख्न खोजेको र उत्तरी छिमेकी चीनको संस्कार हेरे-बुझेको त पक्कै पनि होइन होला । चिनियाँहरूले कुनै पनि नीति बनाउँदा देशैभरबाट विचार संकलन वा विश्लेषण गर्दछन् । यस्तो काम चीनले गर्न सक्छ, चीनभक्तहरूले गर्न सक्दैनन् । हितको कुरा गर्नलाई अरुको भरिया बन्नुपर्छ र ? यस्ता ऐनहरू बनाउँदा सरोकारवालासँग सल्लाह गरे के बिग्रन्थ्यो ? २१ औं शताव्दीको विद्यार्थी अहिलेजस्तै अखिल क्रान्तिकारी, नेविसंघ भनेर हिँड्छ ? तिनलाई त थोत्रा मान्छेहरूको संगठन हो भन्ने गरेको छु मैले । भोलिका मान्छेले मुद्दा हेर्छ । सिद्धान्तलाई आफूसँग जोड्न खोज्छ ।

*० जस्तो ?*

- हिजो निजी विद्यालय माफियाले चलाएको भनेर कसले भनेको ? खोल्या कांग्रेसीले, पैसा कमाएको एमालेले, लुटलाट पारेको माओवादीले होइन ? अहिले हेर्नुहोस् त, सबै पार्टीको निजी विद्यालय छ । निजी विद्यालय २० वर्षमा गुठीमा लैजाने, सहकारीमा परिणत गर्ने बुँदा पहिला हालिएको थियो । निजीका मालिकहरूले एक दिन आन्दोलन गर्नासाथ सरकार ब्याक भएर त्यो बुँदै हटायो । शिक्षकहरूले तीन दिन आन्दोलित हुनुपर्‍यो । यो मुलुक कसले चलाएको, को शक्तिशाली छ त्यहींबाट प्रष्ट हुन्न र ? अर्कोतिर, निजीवालाहरू आक्रामक ढंगले शहरदेखि गाउँसम्म पुगेका छन् । अझै पनि यस्ता सरकारी स्कूल छन्, पानी दर्किए, घाम चर्को लागे बिदा हुन्छन् । निजीसँग सहकार्य गर्ने, त्यताका केटाकेटी सरकारीमा तान्ने खै योजना ? निजी र सरकारीको लडाईं हटाउने काम गर्नुपर्दैन विधेयकले ?

*० अलि बढी लफडा अनुसूची ८ र ९ मा देखियो । खास हुनुपर्ने के थियो ?*

- विषय संविधानको धारा ८ लाई समाउने कि ९ लाई भन्ने हो ? गिरिराजमणि पोखरेल शिक्षामन्त्री हुँदा के-के भनेर कराए । अनुसूची ८ ले एकल अधिकार दिन्छ, ९ ले साझा । शिक्षकले साझा अधिकारको कुरा गरेको त्यही अनुसूची ९ लाई समाएर हो । देवेन्द्र पौडेल मन्त्री हुँदा गरेको एउटा निर्णयको कारण यो भाँडभैलो जन्मिएको हो । अनुसूची ८ अन्तर्गत राख्ने हो, २३ वटा बुँदालाई एकल अधिकारमा राखेर प्रदेश र संघले यसरी सघाउँछ भनिदिए भइगयो नि ! साझा अधिकारभित्र विद्यालय शिक्षाको कुरै छैन तर त्यहीँ लगेर लडाइँ पारिएको छ । संविधानविद्हरू बसेर एकल र साझा अधिकारको विषयमा स्पष्ट पारिदिए समस्या हल हुन्थ्यो । विकेन्द्रीकरण र संघीयता भन्ने शब्दै झिकिदिए भै गयो ! पालिका आफैंले मेरो अधिकार भनेर आँट गर्न सक्दैन । एकल अधिकारले काम गर्छ कि गर्दैन भनेर संविधानविद्ले भनेका छैनन् । केन्द्रीयता जान्ने माओवादी, जनवादी केन्द्रीयता भन्ने एमालेवादी र विकेन्द्रीकरण बुझ्ने कांग्रेसी । तिनैलाई रमाइलो लाग्ने केन्द्रीयता । केन्द्रीयताको कुरा गरेपछि अनुसूची ९ लागू भयो । त्यहीअन्तर्गत शिक्षा आयोगको प्रतिवेदन लेखियो । शिक्षा नीति, दस्तावेजदेखि अहिलेको विधेयक बन्यो । अनुसूची ९ अनुसार लेखिएपछि ८ को काम हुन्छ ?

*० चाहे शिक्षा होस् वा निजामती, यस्ता विधेयक बनाउँदा स्टक होल्डरसँग पर्याप्त छलफल गर्दै गरिएन र ?*

- स्वार्थलाई केन्द्रमा राखेर निर्णय गर्दा एकथरी, देशलाई केन्द्रमा राखेर काम गर्दा अर्कै थरी परिणाम देखिन्छ । आफ्नो स्वार्थ नराख्ने हो भने स्टेक होल्डरसँग परामर्श नगरे पनि राम्रै लेख्न सकिन्छ । उदाहरण म आफैं छु । बागमती प्रदेशले शिक्षा नीति बनाउने भयो । मन्त्री युवराज दुलालले त्यसको जिम्मा मलाई लगाउनुभयो । म त कम्युनिष्ट होइन फेरि, नीति लेख्छु, तपाईंका घोर क्रान्तिकारीलाई देखाउनुहोस्, बेठीक छ भने बदल्नुहोस् भनें । म र बालचन्द्र लुइँटेलले लेखेका हौं । कसैले विरोध गरेन । शिक्षाको जुन दशा छ, उही दशा हो निजामतीको ।

*० प्रधानमन्त्री प्रचण्डले मन्त्रीहरूसँग कार्यसम्पादन सम्झौताको क्रममा संघीय शिक्षा ऐन शुरुमा जस्तो थियो, फर्किएर आउँदा कैयौं विषय उल्टो भएर आयो भन्नुभएको छ । खासमा विद्यायक लेख्दो रहेछ चाहिँ कसले ?*

- हामीले विधिवेत्ता भनेर सांसदहरूलाई भन्छौं । उनीहरूले नै विधि विधान बनाउनुपर्ने हो तर बनाउँछन्, कर्मचारीले । उनीहरूलाई जे रमाइलो लाग्छ, त्यही हालिदिन्छन् । कर्मचारी जन्मैले इशारामा चल्ने जात । कर्मचारीतन्त्रको अनुहार वा विशेषता जनतापक्ष होइन, मालिक पक्ष हो । हालै शिक्षकहरूसँग गरिएको सातबुँदे सम्झौताको पहिलो नम्बरमा घुमाउरो भाषामा सकिँदैन भनिएको छ ! विधेयक त संसदमा प्रवेश गरिसक्यो । सात दिनमा संशोधन मात्र गर्न सक्ने हो । ट्रेड युनियन भनिएको छ । चाहिएको दल युनियन हो कि ट्रेड युनियन ? दलैपिच्छे शिक्षक संगठन छ । राष्ट्रिय शिक्षक संगठनवालाहरू हामी दलका होइनौं भन्छन् तर ती एमालेका हुन । ट्रेड युनियन ढंगको खोजेको भए स्पेन, जर्मनी, इटालीकोझैं दिनभर ९० प्रतिशत समय विद्यार्थीलाई दिनुपर्ने हो । माओवादीले जनवादी शिक्षा भन्छ, जनमुखी शिक्षा भनेको एमालेको, समाजवादी शिक्षा कांग्रेसको, राष्ट्रवादी राप्रपाको, वैज्ञानिक समाजवादी चन्दवादीको । लागु गरौं न त ? तेश्रो कुरा, सुविधाको । जो शिक्षक स्थायी हुनुहुन्छ, जे खोज्नुहुन्छ, दिने पालिका ग्यारेन्टी बसेर । जलविद्युतमा शिक्षकलाई शेयर होल्डर बनाए हुँदैन ? राहत शिक्षकलाई स्पष्टसँग हिजो पढाएको चलनचल्ती आज मिल्दैन भन्नुपर्‍यो । रुकुम पश्चिम पुगें र शिक्षकहरूलाई सोधें, बत्तीमुनी अँध्यारो हुन्छ कि उज्यालो ? उनीहरूले एकै स्वरमा जवाफ दिए, अँध्यारो । त्यही कुरा विद्यार्थीलाई सोध्दा बत्तीमुनी उज्यालो हुन्छ भन्छन् । कुन ठीक ? शिक्षकले टुकी बालेर पढ्नुभयो । बत्तीमुनी अँध्यारो नै थियो । अहिलेका बच्चा बिजुली बत्ती बालेर पढ्छ । बत्तीमुनी उज्यालो देख्छ । ज्ञानको खाडल त रहेछ । त्यो पुर्ने कसरी ? हामी पुराना थोत्रा भयौं कि भएनौं ?

*० शिक्षकको तलब सुविधा बढाउनका लागि राज्यसँग स्रोत छैन भन्दैछन्, मन्त्रीहरू । कसरी व्यवस्थापन गर्न सकिएला ?*

- हर बच्चाको एक रुपैयाँ बचत गर्ने हो भने प्रतिदिन ७७/७८ लाख हुन्छ । वर्षभरि कति हुन्छ ? मैले मन्त्रीहरूलाई भेटेरै बिसे नगर्चीको जत्तिको बुद्धि पनि तपाईंहरूसँग छैन ? तपाईंहरूलाई देश चलाउने व्यवस्थापक भनौं भनेर झस्किएको छु । अर्थमन्त्रीलाई पटक-पटक भनेको हुँ । उनको भेजामा यस्ता कुरा चढ्दैनन् । एडिबी, वर्ल्ड बैंकले पैसा दिइहाल्छ भन्ने थोत्रो सोच र बुद्धि बोकेर हुन्छ ? हामीसँग पैसा छैन भने चाइनिजको बाटो सोचौं न ! बिहान एकथरी विद्यार्थी, दिउँसो नियमित, बेलुका बूढाबुढी । तीनैथरीलाई पढाउने एउटै शिक्षक । व्यवस्थापन गर्ने विषय हो नि ! अब केटाकेटीले पढ्ने भनेको कम्प्युटर, मोबाइलसँग हो । काठमाडौंमा विद्यालयपिच्छे गणित, विज्ञान, अंग्रेजीका अलग अलग शिक्षक पाल्नुपर्छ र ? दश वटा स्कूलका लागि एउटै शिक्षक बनाइदिए हुन्न ? प्राइभेट स्कूल त्यसरी चल्न हुन्छ, सरकारी चल्न हुँदैन ? स्याङ्जाको एउटा स्कूलमा २३ जना विद्यार्थीलाई पढाउने ५ जना शिक्षक छन् । बनाइएको मानकअनुसार ५० जना विद्यार्थी बराबर एक शिक्षक हुनुपर्ने हो । आधा शिक्षक झिकेर मधेशतिर फाल्न हुँदैन ?

**यस्तो काम चीनले गर्न सक्छ, चीनभक्तहरूले गर्न सक्दैनन् ।**

•••

**अर्थमन्त्रीको भेजामा यस्ता कुरा चढ्दैनन् ।**

•••

**राजनीतिले हामीलाई जोड्नुपर्ने ठाउँमा तोड्ने अपराध गरेकै हो ।**

*० शिक्षकहरू स्थानीय तहको अधीनमा बस्दैनौं भन्छन् । उसैगरी कर्मचारीहरू पनि प्रदेश र स्थानीय तहमा जान्नौं, हामी संघकै हुनुपर्‍यो भन्दैछन् । चिकित्सकदेखि प्रहरीको हालत उही देखिन्छ । विकेन्द्रीकरण कसैलाई नचाहिएकै हो ?*

- विकेन्द्रीकरण चाहिएको हो वा अधिकार प्रत्यायोजन ? अधिकार प्रत्योजन चाहिएको हो भने विकेन्द्रीकरण, संघीयता छोड्नुहोस् भन्दा मलाई संघीयताविरोधी भने । कर्मचारी, शिक्षकलाई संघीयता किन चाहिएन भने उनीहरूको दबदबा चलेन । कर्मचारी र शिक्षक पनि राजनीतिक दलका कार्यकर्ता नै हुन् । राजनीतिले हामीलाई जोड्नुपर्ने ठाउँमा तोड्ने अपराध गरेकै हो । कर्मचारीतन्त्रमा संघ, संगठन नखोलेको भए के हुन्थ्यो ?

*० एउटा सहसचिवसरहको माध्यमिक शिक्षकलाई गाउँपालिकाको अधिकृत छैटौंको मातहतमा राखिएको छ । मावि द्वितीय र प्रथम श्रेणीका शिक्षकको मूल्यांकन पनि उनैले गर्ने व्यवस्था छ । यो न्यायसंगत भयो त ? एउटा सिडिओ शाखा अधिकृतमातहत रहन सक्छ ?*

- कर्मचारीतन्त्रको मानसिकता हो यो । त्यो बेला दिनेश थपलियालाई अधिकृतको ठाउँमा संयोजक भनिदिनुहोस् भनें । एउटा शब्दले कति फरक पार्दछ । संयोजक भनिँदा जोडिँदो रहेछ, अधिकृत भनिँदा निहुँ खोजिँदो रहेछ । अर्को अप्ठ्यारो, ज्ञानाअधिकारी, मताधिकारी, नियमाधारी ? अहंता कस्तो छ भने त्यो बिए पास कर्मचारीको अण्डरमा हामी एमए पास गरेको शिक्षक किन बस्ने रे ?

*० खारेजीमा परेको जिल्ला शिक्षा कार्यालय ब्युँताउने कुरा विधेयकमा राखिनु कत्तिको व्यावहारिक छ ?*

- यो साह्रै घटिया काम हो । एकातिर राज्यसँग स्रोत-साधन छैन भन्ने, अर्कोतिर खारेजीमा परेका ७७ वटै जिल्ला शिक्षा कार्यालय फेरि ब्युँताउने ?

*० संविधानले मातृभाषामा शिक्षाको हक हुने भन्छ । फेरि विधेयकमा यी विषय अंग्रेजीमा पढाइ हुनुपर्छ भनिएको छ । विधेयकमा यस्तो प्रावधान आउनु विरोधाभाषपूर्ण भएन र ?*

- भाषाहरू सिक्नलाई कला चाहिने हो कि नेपालमा भाषा चाहिने हो ? लडाइँ यसको मात्र हो । केही जनजातिसँग सोध्छु एउटा क्लासमा कति जना विद्यार्थी हुन्छन् ? ३० जना ? तीमध्ये कम्तीमा आठदेखि दश भाषाभाषीका हुन्छन् । एउटै शिक्षकले आठ-दशवटा भाषा जान्दछ ? शेर्पा, थारु, राईबाट अंग्रेजी जान्ने कसरी ? यो सिकाइदिए त लडाइँ नै भएन नि ! लडाउने बुद्धि हाम्रा नेताहरूसँग बस्यो, मिलाउने बुद्धि मजस्ता सडक छापसँग ।

*० यसरी मिलाउने जुक्ति बोकेर हिँड्दा कत्तिको सकस पाइँदो रहेछ ?*

- गाली मज्जाले खाइन्छ । तँ माफिया, यसलाई मार्नुपर्छ । तँलाई यस्तो अधिकार कसले दियो भन्छन् । विचार बझाउन पाइन्छ नि ! अरुलाई गाली गर्ने मान्छे मलाई अरुले गाली गर्दा खासै दिक्क लाग्दैन ।

*० आठ पास गर्नेले हलो छाड्ने, १० पास गरेकाले थलो छाड्ने र १२ पढेका युवाले देशै छाड्ने स्थिति छ, ब्रेन ड्रेनलाई कसरी ब्रेन ग्रेन बनाउने ?*

- मैले वकालत गरिरहेको पनि त्यही हो । गाउँघरमा एउटा भनाई छ, चारखुट्टेलाई तह लगाउन सकिन्छ, दुई खुट्टेलाई सकिँदैन । दुई खुट्टेको जातै त्यस्तो । अवसर यहाँ भए त यही रोकिन्थें नि ! चीन विदेश गएकामध्ये कम्तीमा १० प्रतिशत फिर्ता आउँछन्, तिनले विदेशबाट ज्ञान, प्रविधि, सीप, पैसा ल्याउँछन् भन्छ । जापानमा गएर हेरें, अंग्रेजी पढाउने जम्मै अमेरिकी रिटर्न । हाम्रा वैदेशिक जनशक्ति पनि एनआरएनलाई माध्यम बनाए फिर्ता ल्याउन सकिन्छ । हाम्रा नेतृत्वले दिनमा एक हजार कमाउन सिकाओस् न त ! खै सिकाएको ? हाम्रा अखिल, नेविसंघ सबैले लुट्ने, कुट्ने मात्र सिकाए । राजनीतिक नेतृत्वले सीप, शिक्षा दिनुहोस् । हर विद्यार्थीको प्रोफाइल बनाउने, उनीहरूले जानेको सीप, बाजेले जानेको सीप बनाउन न पैसा चाहिन्छ । उत्पादित वस्तु पालिकाले किनिदिओस् । सम्भावना देखाउने काम नै भएन । दिमागै नलगाउने अनि बेरोजगार उत्पादन गरे भन्ने । यहाँ रोजगार भएन, बाहिर गए । नामर्दको जोइ हुनुभन्दा मर्दको नोकर हुनु जाति ।

*० हामीकहाँ अनेकन व्यवस्था त फेरियो तर अवस्था फेरिएन भन्छन् । यो अवस्था फेरिनेमा कत्तिको आशावादी हुनुहुन्छ ?*

- अँध्यारो भएपछि कसै न कसैले बत्ती नबाली धरै छैन । शिक्षाको विकृतिविरुद्ध, सुधारका लागि निरन्तर बोलेर हिँड्दा डलर खायो, दरबारको पैसा खाएर बोल्यो भन्ने खुब मीठो गाली खाइयो । यो मुलुक बनाउन सक्छ भने शिक्षकले मात्र सक्छ भनेर दशकौंदेखि कराउँदै हिँडें । अरुले त गफ दिनेमात्र हो । शिक्षकले खुट्टा टेकेको दिनमा हामी सुध्रन्छौं । एक जना सज्जन धनञ्जय आचार्यले असल शिक्षकलाई ५० लाख दिन्छु भन्नुभएको छ । हामी अहिले देशभरबाट असल शिक्षक संकलन गरिरहेका छौं । अब्बल गर्नेलाई एक ठाउँमा राखेर, कम काम गर्नेको जोडा बाँध्न सक्ने हो शिक्षामा केही सुधार गर्न सकिन्छ कि !

*० खाइजीविका कसरी चल्छ ?*

- विश्वविद्यालयको पेन्सनर, न मोटर न मोटरसाइकल, मेरो आवश्यकता ठूलो छैन । वौद्धिक ज्यामीको काम गर्छु । कुनै पालिकाले, कुनै निकायले रिसर्चको काम लगाए त्यही गर्छु । म पेन्सन होल्डर हो, खाइजीविकाको टेन्सन छैन ।

## फोटो



दिपेन्द्रराज गिरी



बाटो हिंड्दासमेत अचेल फेसबुकतिरै आँखा, मोबाइलबिना अधुरा उजाड लाग्छन् गाउँ र वनपाखा किताबतिर मनै जान्न च्याटिङले नै तान्छ, पकेट खर्च आधाजति डाटाले नै खान्छ

## मेरो कथा, मेरो व्यथा



हरिजी
priyarasuwa@gmail.com

# हाकिम ओसार्ने गुरुजीहरू झन् हैरान

बहुदलीय व्यवस्था पुनःस्थापनापछि दर्जन बढी प्रधानमन्त्री हाँक्ने माधव कार्कीजस्ता एक्ला ड्राइभर पनि थिए । अनि हामीजस्ता निरीह ड्राइभर पनि छौं जो सचिव/सहसचिव परिवर्तन हुनेबित्तिकै हुत्याइन्छौं । माधव सर ०४२ सालमा कृषि मन्त्रालयमा प्रवेश गरी ०४७ सालमा गृह मन्त्रालय हुँदै प्रधानमन्त्रीको सवारी चलाउने महत्वपूर्ण जिम्मेवारीमा रहेर निवृत्त भइसक्नुभयो । जालझेल र बेइमानी नै सर्वेसर्वा भएको ठाउँमा इमान्दारीको कदर हुनु त परको कुरा, त्यही इमान्दारी र सोझोपनाको फाइदा उठाउँदै मन्त्रालयका केही 'टाउके'ले गरेको दुर्व्यवहारको कहानी हो यो । अर्थात् देशको बागडोर सम्हालेका र देश चलाउने मन्त्रीदेखि सचिवहरूसम्मलाई सुरक्षित तवरले गन्तव्यसम्म पुऱ्याउने मन्त्रालयका चालकको पीडाको कहानी छ यसमा ।

दश वर्षे सशस्त्र जनयुद्धको उद्गमस्थल मानिने रोल्पाको लिबाङमा जन्मेर हुर्किएको हुँ । बाल्यकालमै टुहुरो बन्न पुगें । सात वर्ष हुँदा आमा बित्नुभयो, बाह्र वर्षको हुँदा बुवा यो धर्तीमा रहनुभएन । बुवा र आमाको काख र साथ गुमाएको मेरालागि आड, भरोसा, माया प्रेमको छत्र छहारी बन्नुभयो दाजुहरू । भन्न त भनिन्छ बुवापछिको बुवा भनेका दाजुहरू हुन् । ममाथि दुई जना दाजै हुनुहुन्थ्यो अर्थात् म घरको साहिँलो छोरा । बुवाको देहान्तपछि दाजुहरू घरबार छाडेर भारततिर भौंतारिन पुग्नुभयो र उतै रमाउन थाल्नुभयो । कान्छो भाइलाई पनि उतै लैजानुभयो । कान्छो भाइ कस्तो छ भन्ने अनुहार मात्र याद छ । सायद देखें भने पनि चिन्दिनँ होला । खै किन मानेन त्यो समयमा यो मन भारततिर भौंतारिन त थाहा छैन । त्यहींबाट टुट्यो, दाजुभाइको सम्बन्ध । मनभरि सपना, झोलाभरि मीठो भविष्यको कल्पना बोकेर ०६२ सालमा राजधानी भित्रिएको हुँ ।

एउटा दुर्गम गाउँमा जन्मेर हुर्किएको मान्छे । बाल्यकालमा खासै ठूला सपना देखिएनन् । स्कूले शिक्षा अध्ययन गर्दै गर्दा १० वर्ष जनयुद्धको उद्गमस्थल रोल्पामा टिक्न सकिएन । अध्ययनलाई बीचमै थाती राखेर जनयुद्धले थिलथिलो भएको रोल्पा छाडी राजधानी भित्रिएको पनि दश वर्ष बितिसकेछ । अध्ययन टुट्यो । जागिरका लागि शैक्षिक प्रमाणपत्रलाई नै मुख्य मानिने राजधानी खाल्डोमा प्रवेश गरियो । तर, न हातमा थियो शैक्षिक प्रमाणपत्र न त थियो कुनै सीप । सशस्त्र जनयुद्धबाट बच्नका लागि राजधानी छिर्दा व्यहोरेको सास्ती र पीडाको बयान म शब्दमा गर्न पनि सक्दिनँ । दुःख-सुख गरी यही बीचमा सवारी साधन चलाउन सिकियो । सवारी चालकको अनुमति पत्र प्राप्त गर्दा जिन्दगीकै सबैभन्दा बढी उल्लासको दिन ठानियो ।

केही समय निजी र भाडाका सवारी साधन चलाएँ । यतै गरिएको अथक प्रयास र मिहिनेतको बाबजुद सरकारी नुनपानी खाने अहोभाग्य मिल्यो । झण्डै सात वर्षपछाडि ०६८ सालदेखि ड्राइभिङ पेशामा छिरें । सरकारी गाडी गुडाउन थालेको झण्डै दश वर्ष पुग्न थाल्यो । लामो समयसम्म गृहकै गाडी चलाएँ । बीचमा केही मन्त्री र सचिवको गाडी चलाउनुपर्दा मन्त्रालय मात्र परिवर्तन भयो । धेरै समयचाहिँ गृहकै उपसचिवदेखि सहसचिव/सचिवहरूलाई ओसारें । उनीहरूकै सेवामा अहोरात्र खटिएँ । यो बीच सरकारी ओहदामा रहेका अजीव/अजीव पात्र देखें । तिनका चुरीफुरी, रवाफ, हामीजस्ता भुइँमान्छेलाई गर्ने व्यवहार, सबैका नाम नओकलौं, दिलको कुनामा लेखेर राखेको छु । हामी निम्सरो मान्छे, गृहले जहाँ खटायो उहीं जाने हो । अघिल्लो सरकारका उद्योगमन्त्री महेश बस्नेतदेखि शान्ता मानवीलगायत मन्त्री र सचिव, सहसचिव र उपसचिवको सेवा गरें ।

महेश बस्नेतलाई ९ महिनासम्म बोकें, शान्ता मानवीलाई साढे दुई महिना, यसका अलावा अरु पूर्वएमाले र पूर्व माओवादी निकट केही मन्त्रीको ड्राइभर बनेर सेवा गरें । यसरी सेवा गरिएका शासक, प्रशासकमध्ये केही मात्र श्रमिकको कदर गर्ने । एउटा श्रमिकले के खोज्छ ? काम गरेपछि श्रमको मूल्य, चित्त बुझाएरै काम गरिरहेको थिएँ । काममा कहिल्यै ठग्न जानिएन । तर, यहाँ नाम त उल्लेख नगरौं केही मन्त्रीका आसेपासे र हनुमानहरूले मैले पाउनुपर्ने पारिश्रमिकतासमेत पचाइदिएका छन् धेरै पटक । यही कुराको विरोध गर्दा जागिरबाट गलहत्याइएँ । दिनभरि श्रम गरी जहान बच्चा पाल्नुपर्ने हामीजस्ता भुइँमान्छेको तलबसमेत पचाइदिने मन्त्रीज्यूका स्वकीय सचिवबाट कस्तो सदाचारपूर्ण काम होला ? आफैं अनुमान लगाउनुहोस् । केही मन्त्रीका पिए कस्ता-कस्ता भने मन्त्रीज्यूले चढ्दै आएको गाडीमा उनीहरूलाई नै चढाउनुपर्ने रे ! उनलाई पनि झण्डावाल गाडी लिएर घरमा लिन/लैजान जानुपर्ने रे ! मन्त्री चढ्ने गाडी कसरी जहाँ पायो त्यहाँ मनमौजी मैले चलाउन सक्थें ! सक्दिनँ/हुँदैन भन्ने अड्डी लिन्थें । यही कारण उनीहरूको आँखाको तारो बनेको छु धेरैपटक ।

**केही मन्त्रीका आसेपासे र हनुमानहरूले मैले पाउनुपर्ने पारिश्रमिकतासमेत पचाइदिएका छन् धेरै पटक ।**

एक जना सचिव छन्, नाम नभनौं । ठूलो मान्छेको इज्जत जाला । त्यतिखेर म उपसचिवको गाडी चलाउँथें । गृहकै प्रांगणमा बसिरहेको थिएँ । सचिवज्यू आउनुभयो । नमस्कार टक्र्याएँ, फिर्ता गर्नुभएन । यो गाडी किन सफा नगरेको, किन फोहोर ? तपाईंको काम, कर्तव्य, अधिकार के हो भन्दै थर्काउनुभयो । कसको रिस ल्याएर मलाई पोखेको हो, 'मेरो काम कर्तव्य के हो मलाई सिकाइरहनुपर्दैन सचिवज्यू भन्ने जवाफ फर्काएँ ।' मेसिनरी सामान हो, सधैं एकैनाश कहाँ रहन्छ र ? कहिलेकाहीं गाडी बिग्रिन्छ । तिनै सचिव आरोप लगाउँथे आफैंले गाडीको नट खुस्काएर गाडी बिगारेछ । ए बाबा, खाएको विष पो लाग्छ, नखाएको विष कसरी लाग्ला ?

म एउटा निमुखा मान्छे, जाबो एउटा ड्राइभरलाई हटाउन निजी सचिव, पिएदेखि मन्त्रालयका सचिवसम्म लागिपरेका छन्, धेरै पटक । यहाँ त श्रम-पसिना बेचेर खान्छु भन्दा पनि पाइँदैन रहेछ । बरु उल्टै जागिरे जीवनको दौरान धेरै पटक मेरो श्रम-पसिना मन्त्रीका पिएदेखि मन्त्रालयका सचिवसम्म मिलेर खाइदिएका छन् । श्रमको मूल्य खोज्दा मन्त्रीको गाडी चलाउनबाटै गलहत्याइदिएका छन् । यस्तै/यस्तै आसेपासे, अरौटे भरौटेका कारण न हो इमान्दार र स्वच्छ छवि भएका मन्त्रीहरू विवादमा तानिने !

अहिले गृहमै फर्किएको छु । मलाई त केही छैन, आफू आधा पेट खाएर, ऋण नै गरेर भए पनि सन्तान पालौंला/पालेकै छु । एक जना सहसचिवको गाडी चालक बनेर सेवा गरिरहेकै थिएँ । उनी कुनै मालदार विभागको हाकिम बने । हाकिम बन्न सुटकेशमा पैसा बोकाएर मलाई नै मन्त्रीको घरमा पठाए । पैसा बुझाएर हाकिम भएका कर्मचारीले पैसा उठाउने धन्दा गर्ने नै भयो । श्रीमान् श्रीमती नै सरकारी सेवामा । उनकी श्रीमती उपसचिव । हरेक बेलुका द्वारिकाजदेखि सोल्टी होटलमा जमघट । कहाँबाट आउँछ त्यत्रो खर्च ? बिचौलियाहरू नै उनीहरूका लागि चाहिने खर्च जुटाउँथे । कहिले राति १२ बजे त कहिले १ बजेसम्म कुरेर बस्नुपर्थ्यो । खुशी भएको दिन पाँच/सात हजार गोजीमा हालिदिन्थे । उनका सबै बदमासी थाहा पाएपछि ६ महिनामै हटाए र करारका ड्राइभर नियुक्त गरेका छन् । कानुनतः सहसचिवसम्मलाई गाडी सुविधा हुन्छ । उपसचिवलाई गाडी दिने भन्ने कुरा सरकारले कहीं लेखेको छैन । तर, श्रीमतीलाई सरकारी गाडी सुविधा दिएर अनेक नाममा लुट मच्चाएका छन् । यसरी हामी चालक पेलानमा छौं । हाम्रो पीडा कसले सुन्ने ? छँदाखाँदाका स्थायी कर्मचारीलाई हटाएर करारका ड्राइभर किन राख्छन्, हाकिमहरू ? कारण यही हो । यस्तो प्रथा कसले सुधार्ने ? हामीजस्ता भुइँमान्छेले बोलेको कसले सुन्छ यहाँ ?

*- गृह मन्त्रालयका एक सवारी चालक*

## जनप्रतिनिधि उहिल्यै अमेरिका, भत्ता खुरुक्क यता

जनताको सेवा गर्न निर्वाचित जनप्रतिनिधिमध्ये कतिपय धनप्रतिनिधिको कित्तामा पुगेको तथ्य फेला परेको छ । महिनौंदेखि विदेश भास्सिएका त्यस्ता जनप्रतिनिधिका नाममा रहेको खातामा सरकारी कोषको पैसा खुरुखुरु हाल्दै आइएको भेटिएको छ ।

पोखरा महानगरपालिका-२० का वडासदस्य उत्तम गुरुङ निर्वाचित भएलगत्तै २०७९ पुसदेखि अमेरिका गएकोमा १० महिना बितिसक्दा पनि फर्किएका छैनन् । एमालेबाट निर्वाचित उनी छिट्टै फर्कन्छु भनेर गएको २० नम्बरका वडाध्यक्ष गंगाबहादुर क्षेत्रीले बताए । गुरुङ १० महिनादेखि सम्पर्कविहीन भए पनि पोखरा महानगरपालिकाले उनको खातामा मासिक १५ हजार ३ सय रूपैयाँ जम्मा गरिदिएको छ । अमेरिका पुगेर सम्पर्कविहीन रहे पनि उनको खातामा नागरिकले तिरेको कर राजस्व डेढ लाख रूपैयाँभन्दा बढी जम्मा गरिएको छ ।

शुरुका वर्षमा कर्मचारीझैं गरी खाँदै आएको तलब सुविधा सर्वोच्च अदालतले अवैध घोषणा गरिदिएपछि प्रदेश सरकारले इन्धन, सञ्चार, यातायात, अतिथि सत्कार, अनुगमनजस्ता उपशीर्षक राखेर सुविधा दिने बाटो खोलिएको थियो । विदेश बसेका जनप्रतिनिधिले उपस्थितिबिनै पैसा खान पाउने भएपछि राज्यको ढुकुटी दोहन बढेको प्रष्ट हुन आएको छ । वडा पदाधिकारीको बैठक माइन्युट गर्ने सदस्य सचिवले समेत महानगरलाई जानकारी नगरिदिएका कारण विदेश बसेका जनप्रतिनिधिको नाममा पैसा गएको पोखरा महानगरका सूचना अधिकारी किरण कोइरालाले बताए ।

यसअघि पनि पोखरा-२० कै जनप्रतिनिधि लक्ष्मी सुवेदी महानगरलाई जानकारी नगराई १५ महिनासम्म अष्ट्रेलिया पुगेर सम्पर्कविहीन भएकी थिइन् । उक्त मितिमा उनको नाममा महानगरले कति पैसा खातामा हालिदियो त्यो पनि खोजी हुनुपर्ने आवाज उठेको छ । राज्यलाई जानकारी नदिई देश छाड्ने जनप्रतिनिधि र त्यस्ता पात्रको खातामा पैसा हालिदिने कर्मचारीको हकमा नियामक निकायको आँखा जान्छ कि जाँदैन, हेर्न बाँकी नै छ ।

*- यदुनाथ बञ्जारा*

# भ्रष्टाचारको मुहान, अख्तियारको पछिल्लो बयान

तथ्य तथ्यांकले स्थानीय तह भ्रष्टाचार र अनियमितताको मुहान देखाएको छ । अख्तियारको तीन वर्षको रेकर्डले यस्तो स्थिति दर्शाएको हो ।

उसले दायर गरेका भ्रष्टाचार मुद्दामा जनप्रतिनिधिको लामो श्रृंखला नै छ । विशेष अदालतमा दर्ता भएका मुद्दाको सूचीअनुसार ०७७/७८ मा २२ जना जनप्रतिनिधिविरुद्ध भ्रष्टाचार मुद्दा दर्ता भएकोमा ०७८-७९ मा १५१ पुगेको छ । ०७९/८० मा आउँदा २२६ जना जनप्रतिनिधिले यस्तो अभियोग खेप्नुपरेको छ । पछिल्लो तीन वर्ष चार सय स्थानीय जनप्रतिनिधिले विशेष अदालतमा तारिख खेपिरहेका छन् ।

यता, विशेष अदालतको अभिलेखबाट ०७९/८० मा १६२ थान भ्रष्टाचार मुद्दा दायर भएको छ । जसमा प्रतिवादीको संख्या ७६० छ । यीमध्ये निर्वाचित जनप्रतिनिधि मात्र २२६ जना छन् । भ्रष्टाचारको मुद्दा खेप्नेमध्ये कर्मचारीपछि दोस्रो ठूलो संख्या स्थानीय जनप्रतिनिधिको देखिएको छ । अहिले पनि भ्रष्टाचारसम्बन्धी सबैभन्दा बढी उजुरी स्थानीयसँग सम्बन्धित छन् । अधिकांश उजुरीमा जनप्रतिनिधि कुनै न कुनै फण्डामा मुछिएका छन् ।

०७८/७९ मा १६ हजार २३८ वटा उजुरी परेका थिए । तीमध्ये ५ हजार ३२१ वटा त संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालयसँग सम्बन्धित छन् । यसबाट ३२.७६ प्रतिशत उजुरी संघीय मामिला मन्त्रालयसँग सम्बन्धित देखाउँछ । त्यसमा पनि मधेश प्रदेशका स्थानीय तहविरुद्ध सबैभन्दा बढी उजुरी छन् ।

जनप्रतिनिधि अभियुक्त रहेका मुद्दामध्ये गैरकानुनी लाभ हानिसम्बन्धी अभियोगमा ७९, सार्वजनिक सम्पत्ति हानि नोक्सानी गरेको आरोपमा ४७, राजश्व चुहावट गरेको अभियोगमा १५, घुस लिएको अभियोगमा ८, गलत लिखत-प्रतिवेदन दिने र कागजात सच्याएको अभियोगमा २ जनाको संलग्नता देखिएको छ । यसरी स्थानीय तहमा विकास योजना र बजेट बढेसँगै भ्रष्टाचारमा जनप्रतिनिधिको सक्रियता बढेको देखिएको छ ।

# चौधरीलाई पोस्ने चालबाजी त हैन यो ?

मुलुकको राजश्व आम्दानी लगातार घटिरहेको बेला सरकारी निकायका केही पहल र निर्णय भने त्यसलाई नै मलजल गर्ने उद्देश्यबाट प्रेरित भैरहेको पाइन्छ । सञ्चालनरत, सेवा नै सञ्चालन नगरी लाइसेन्स मात्र ओगटेका र नयाँ दर्ता हुने दूरसञ्चार कम्पनीले अब भने आयको आधारमा हालको भन्दा थोरै शुल्क तिरे पुग्ने व्यवस्था मिलाउन लागिएको छ ।

३६ करोड रूपैयाँ तिरेरमात्र मोबाइल सेवाको लाइसेन्स नवीकरण गर्नुपर्ने नियमलाई १ करोड र लाइसेन्स लिई कामै नगरेका कम्पनीको हकमा नवीकरण दस्तुर २० अर्बको सट्टा १ अर्ब रूपैयाँ गर्न लागिएको छ । नेपाल दूरसञ्चार प्राधिकरणले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयमा पठाएको दूरसञ्चार सम्बन्धी कानून संशोधन र एकीकरण गर्न बनेको विधेयक मस्यौदामा उक्त व्यवस्था छ । हाल ३५ करोड ७५ लाख रूपैयाँ तोकिएको मोबाइल सेवा (आधारभूत दूरसञ्चार सेवासमेत) को लाइसेन्स शुल्क घटाउने गरी प्राधिकरण सञ्चालक समितिले सिफारिससहित मन्त्रालयमा पत्र पठाएको छ ।

नयाँ प्रस्तावमा अनुमतिपत्र प्राप्त गरेको मितिबाट पहिलो पाँच वर्षसम्म प्रत्येक वर्ष एक करोड रूपैयाँ वा सो वर्ष आर्जन गरेको कू ल आम्दानीको ८ प्रतिशतले हुने रकममध्ये बढी हुन आउने रकम दस्तुरको रूपमा बुझाउने सजिलो व्यवस्था गरिएको छ । नयाँ व्यवस्था लागु भएको खण्डमा हालका मोबाइल सेवा प्रदायक कम्पनीलाई नवीकरणका लागि थोरै रकम तिरे पुग्छ । उदाहरणको निम्ति नेपाल टेलिकमले गत आर्थिक वर्ष ३६ अर्ब ८० करोड र एनसेलले ३८ अर्ब ५९ करोड रूपैयाँ कूल आम्दानी गरेको थियो ।

उसले नवीकरणवापत सरकारलाई पहिले चार अर्ब रूपैयाँ हाराहारी शुल्क बुझाएकोमा आगामी वर्षदेखि तीन अर्ब मात्रै बुझाए पुग्छ । तर योभन्दा पनि बढी फाइदा लाइसेन्स लिएका तर पूर्ण सेवा प्रदान नगरेका विवादास्पद विनोद चौधरीको सिजी टेलिकमजस्ता कम्पनीलाई पुग्ने निश्चित छ। यसअघि झण्डै ३६ करोड वार्षिक बुझाउनुपर्ने उक्त कम्पनीको अनुमति अब वार्षिक एक करोड रूपैयाँ तिरे नवीकरण हुन्छ ।

यसका साथै मस्यौदामा हालको २५ वर्षे लाइसेन्स अवधि खारेज गर्नुपर्ने जिकीर गरिएको छ । जसअनुसार नवीकरण गरुञ्जेल दूरसञ्चार सेवाको अनुमतिपत्र कायम रहने व्यवस्था गर्न खोजिएको बताइन्छ ।

# सुदूरपश्चिम एमालेमा सम्भव होला र सहमति ?

नेकपा (एमाले) का केन्द्रीय सचिव तथा सुदूरपश्चिम प्रदेश इन्चार्ज छविलाल विश्वकर्माले असोज २१ र २२ गते हुने पहिलो प्रदेश अधिवेशनका लागि ५३ हजार २५२ पार्टी सदस्य र जनसंगठनबाट गरेर झण्डै ६ सय प्रतिनिधि छानिने दाबीसहित ९० हजार सदस्यमध्ये ४७ हजारले नवीकरण गरेको र पाँच हजार नयाँ थपिएको बताएका छन् । अहिलेसम्म कृष्णप्रसाद जैसी र बचनबहादुर सिंहले मात्र अध्यक्षमा दावेदारी प्रस्तुत गरेका छन् । तर, केन्द्रीय सदस्यद्वय लालबहादुर थापा र झपट रावललाई समेत अध्यक्षमा उठ्न दबाव सिर्जना गर्न थालिएको छ । उनीहरू मैदानमा आएनन् भने उपाध्यक्ष कमल तिमिल्सेना पनि भिड्ने चर्चा छ ।

# आफ्नो मान्छे भए सातखत माफ !

माओवादीबाट आएका टोपबहादुर रायमाझी र रामबहादुर थापादेखि नक्कली डाक्टर सुनिल शर्मासम्मलाई संरक्षण दिने नेताले आफूनिकट कर्मचारी घुसखोरी र राजश्व हिनामिनामा मुछिए केसम्म गर्लान् ? यस्तै एक जनालाई जोगाउन रसुवा एमालेका नेताहरूलाई भ्याइ नभ्याइ छ । सरकारी राजश्व आफ्नै खातामा दाखिला गर्नेदेखि जनप्रतिनिधिको हस्ताक्षर कीर्ते गर्दै आएका वडा सचिव वाङदी तामाङलाई बचाउन गोसाइँकुण्ड गाउँपालिकाका अध्यक्ष कैसाङ नुर्पु लागिपरेको आरोप केही वडा अध्यक्षले लगाएका छन् ।




यस्तो धन्दामा संलग्न वाङ्दी सदरमुकाम धुन्चेसँगै रहेको गोसाइँकुण्ड गाउँपालिका-२ का वडासचिव हुन् । उनले पछिल्लो महिनामै मात्र नक्कली रसिद काटेर २ लाख ६४ हजार रकम आफ्नो व्यक्तिगत खातामा दाखिला गराएको प्रमाणसहित वडाध्यक्ष छिरिङ नोर्के तामाङ थिए । भदौ २६ गते सिडिओ कार्यालयमा पुगेका थिए । उनले जग्गा बिक्री, नामसारी र अन्य कामबापतको राजश्वमा नक्कली रसिद दिँदै रकम आफ्नो खातामा जम्मा गर्ने गरेका थिए । सोही दिन अध्यक्ष तामाङले प्रहरीमा समेत कीर्तेको उजुरी दिएका छन् ।

गत साउन २४ गते (चलानी नम्बर ३९१) आफ्नो नाममा दर्ता श्रेस्ता भएको टिमुरे वडा नम्बर ८ र कित्ता नम्बर १२९ मा क्षेत्रफल १-१२-२-० को जग्गा राजीनामा पास गराउँदा अध्यक्षको कीर्ते हस्ताक्षर गरी मालपोतमा सिफारिस गरेको भेटिएसँगै उनीविरुद्ध उजुरी जिल्ला प्रहरी कार्यालयमा दिएको भए पनि कुनै कारवाही नभएको गुनासो पोख्छन् वडाध्यक्ष तामाङ ।

दुई साताअघि पालिकामा तानिएका सचिव मंगलबारबाटै कार्यालयमा हाजिर हुन लागेको प्रमुख प्रशासकीय अधिकृत दुतेन्द्र चाम्लिङले जनआस्थालाई जानकारी दिएका छन् । प्रमुख जिल्ला अधिकारी प्रकाशचन्द्र अधिकारीका अनुसार यस प्रकरणमा सहायक प्रजिअ लोकेन्द्र ज्ञवालीको संयोजकत्वमा दुई सदस्यीय छानबिन समिति बनेको छ । वाङ्दी दुई दशकदेखि सोही वडामा सचिव छन् । यस्ता भ्रष्ट कर्मचारीलाई जोगाउन अहिले रसुवा एमालेका नेताहरूलाई भ्याइ नभ्याइ भएको बताइन्छ ।

## चीनमा...

थप प्रगति केही छैन । संयुक्त विज्ञप्तिमा यो प्रसारण लाइन निर्माणमा लगानी कसले गर्ने उल्लेख नभए पनि चीनले अनुदानमा बनाइदिने प्रतिनिधिमण्डलका एक सहभागीले जनआस्थालाई बताए । संयुक्त विज्ञप्ति सामान्यत: दुई प्रधानमन्त्रीको भेटवार्तापछि जारी गर्ने चलन छ । यसपटक एक दिन ढिला मात्र जारी हुन सक्यो त्यो पनि प्रचण्डले बेइजिङ छोड्नै लाग्दा । प्रधानमन्त्रीको टोली मंगलबार बिहान बेइजिङबाट छोडछिड प्रस्थान गरेको छ । संयुक्त विज्ञप्ति जारी गर्न ढिला भएको विषयमा भ्रमण टोलीका एक सदस्य भन्छन्, ‘बीचमा केही असहमति पैदा भएको थियो ।’

चीनले पोखरा अन्तर्राष्ट्रिय विमानस्थललाई बिआरआईमा समावेश गर्न प्रस्ताव गरेको थियो । तर प्रचण्डले उक्त प्रस्तावलाई स्वीकार गरेनन् । नेपालमा बिआरआईका कुनै पनि परियोजना अगाडि नबढेको कारण चीनले बारम्बार असन्तुष्टि जनाउँदै आएको छ ।

प्रधानमन्त्रीले पोखरा विमानस्थल निर्माणको ऋणलाई मिनाह गरिदिन अथवा अनुदानमा परिणत गरिदिन अनुरोध गरे । उनको अनुरोधलाई चीनले सुन्यो मात्र । निर्माण सम्पन्न भएको एक वर्षमै ऋण मिनाहा गर्छ अथवा अनुदानमा परिणत गरिहाल्छ भन्ने कुरा आफैँमा पत्यारलाग्दो छैन । एकातिर दिइएका ठूला जलविद्युत् आयोजना चिनियाँ कम्पनीबाट खोसेर भारतलाई दिने काम भइरहेको छ भने अर्कातिर चिनियाँ ऋणमा बनेको विमानस्थललाई राम्ररी सञ्चालनमै नआइकन ऋण मिनाहा गरिदिनुहोस् भन्नु गाउँघरमा छोराको बिहेका लागि लिएको ऋण भतेर खाएको भोलिपल्टै मिनाहा गरिदिनुहोस् मालिक भन्नुजस्तै हो भन्नेहरू पनि भ्रमण दलमै छन् ।

चीनले बनाइ दिन्छु भनेर तयारी गरेको टिमुरे केरुङ ट्रान्समिसन लाइनको परिपक्व सम्झौता रोक्नका लागि नै अन्तिम समयमा ऊर्जामन्त्री र विद्युत् प्राधिकरणका प्रबन्ध निर्देशकलाई भ्रमण टोलीबाट आउट गरिएको केही केहीको बुझाइ छ ।

प्रचण्ड भ्रमणका बाँकी सहमति राजदूत अथवा सचिव स्तरको भ्रमणले गर्ने भन्दा माथिका छैनन् । जतिसुकै तामझामले प्रसार गरे पनि संयुक्त विज्ञप्तिमा भएका बुँदालाई केलाउँदा प्रचण्डको चीन भ्रमण हात्ती आयो हात्ती आयो फुस्साजस्तो भएको छ ।

**उताको चासो: यताको बेवास्ता**

०६३ सालमा शान्ति प्रक्रियामा आएदेखि नै प्रचण्डलाई चीनले निकै महत्व दिँदै आएको छ । जसरी स्वदेशमा प्रचण्डको लोकप्रियताको पारो छाँगो खसेजस्तै खसिरहेको छ त्यसैगरी चीनप्रतिको विश्वास पनि प्रचण्डले गुमाउँदै गएको बुझिन्छ ।

प्रचण्डको समर्थनमा प्रधानमन्त्री बनेका शेरबहादुर देउवाले हुम्लामा चीनले सीमा मिचेको भनेर छानबिन समिति बनाउन खोज्दा प्रचण्ड त्यसको साक्षी बन्न पुगे । उनले देउवाको उक्त कदमलाई रोक्न सक्थे तर चासो देखाएनन् । त्यसभन्दा अगाडि नै एक टेलिभिजन अन्तर्वार्तामा भारतलाई कम्फर्टेबल सरकार बन्ने भनेर चुकिसकेका थिए ।

गत वर्ष सम्पन्न निर्वाचनपछि बोआओ फोरममा चीनले निमन्त्रणा गरेको थियो । तर, उनी भारतको निम्तो पर्खिएर बसे र राजदूतकै सल्लाहमा नगएको भनिदिए ।

अघिल्लो सरकार र वर्तमान सरकारले चिनियाँ कम्पनीलाई दिइएका ठूला जलविद्युत् परियोजना खोस्दै भारतलाई दिने काम गरिरहेका छन् । अब खोसिने पालो तमोर जलविद्युत्को रहेको छ । चीनले अघि सारेको ग्लोबल सेक्युरिटी इनिसिएटिभ (जीएसआई)मा नेपाल सहभागी बन्न नसक्ने भन्दै नेपाल असंलग्न राष्ट्र बनेको प्रचण्डले बताएका छन् । तर उनकै पार्टी सहभागी भएको अघिल्लो देउवा सरकारले हतार हतार युक्रेनको समर्थन गर्दै विज्ञप्ति जारी गरेको थियो ।

**भ्रमण उत्तरको, उपलब्धि दक्षिणको ?**

प्रधानमन्त्री प्रचण्ड चीन भ्रमणमा रहेकै बेला काठमाडौँस्थित भारतीय दूतावासले लगातार प्रचारयुद्ध छेडेको छ । उसले नेपालका प्रधानमन्त्रीको भारत भ्रमणपछिका उपलब्धि भन्दै बुँदागत र श्रृंखलाबद्ध रूपमा सार्वजनिक गरेर नेपालीको ध्यान अन्यत्र तान्न खोजेको देखिन्छ ।

प्रचण्ड भारत भ्रमण गरेर फर्किएको धेरै भयो । त्यही समयमा यसबारे राम्रै चर्चा भएकै थियो । अहिले आएर त्यस्तो कुनै नयाँ अध्यावधिक गर्ने समय र कुरा पनि थिएन । तर, भारतीय राजदूतावासले सामाजिक सञ्जाल एक्समार्फत् नेपालसँगका विकास साझेदारीले थप गति लिएको उल्लेख गर्दै विभिन्न महत्त्वपूर्ण आयोजनाको प्रगति विवरण सार्वजनिक गरेको छ ।

**बुढेसकालको तीर्थाटन**

प्रचण्डको चीन भ्रमण भारत भ्रमणजस्तै तीर्थाटनमा परिणत भएको छ । हाम्रा प्रधानमन्त्रीले चीनमै एक साता बिताएर आफूलाई निकै फुर्सदिलो र हाइसञ्चो भएको नेताका रूपमा उभ्याएका छन् । हाङचौमा आयोजित १९ औं एशियाली खेलकुदको उद्घाटन समारोह र बेइजिङमा चिनियाँ समकक्षी लि छ्याङसँग भेटपछि जारी संयुक्त विज्ञप्तिसँगै भ्रमण समाप्त भइसकेको थियो । तर प्रचण्डले उच्च भेटघाट र दुई पक्षीय कुराकानीलाई भन्दा तीर्थाटनलाई प्राथमिकतामा राखेको पाइयो । बेइजिङबाट छोडचिङ र त्यहाँबाट तिब्बत स्वायत्त प्रदेशको सदरमुकाम ल्हासा हुँदै मानसरोवर दर्शनमा हेलिँदै छन् । उनी पहिले नै अमेरिका भ्रमणमा निस्केकाले झण्डै दुई साता देश बाहिर बितेको छ ।

राष्ट्रिय ढुकुटीलाई जोगाउन भन्दै सानो टोली लिएर अमेरिका निस्किएका प्रचण्डसँग बेइजिङ पुगेका नेपालीको संख्या उदेकलाग्दो गरी बढेको छ । मानसरोवर जानका लागि मात्र भनेर प्रचण्डका दर्जनौं निकटवर्ती बेइजिङ पुगेका छन् ।

# नेपालमा बढे क्रिश्चियन निरन्तर

एकेश्वरवादी धर्म मानिने इसाई धर्मावलम्बीको बोलबाला केही समययता नेपालमा तीव्र गतिमा बढेको छ । हाल मुलुकमा १२ हजार बढी चर्च छन् । झण्डै ३० लाख नेपालीले क्रिश्चियन धर्म मान्दै आएका छन् ।

अन्तर्राष्ट्रिय खिष्टियन संस्था ‘युनाइटेड मिसन नेपाल’ को सक्रियतामा नेपालीलाई क्रिश्चियन बनाउने अभियान चलेको छ । नेपाल राष्ट्रिय मण्डली संगति र नेपाल खिष्टियन समाजले धर्मान्तर अभियान चलाउन केही समयअगाडि संयुक्त आह्वान नै गरेका थिए । धर्मान्तर मिसन नेपालमा तीव्र गतिमा अगाडि बढेको र संविधानमा खसआर्य एकै भनी उल्लेख हुँदा समस्यामा परेको उनले पठाएको पत्रमा उल्लेख छ ।

ब्राह्मण समुदायलाई आर्य-हिन्दु र क्षेत्री समुदायलाई खस-मष्टामा विभाजन गरी धर्मान्तरको अभियान सुचारु गरिने भनिएको छ । संगतिका महासचिव पास्टर शेरबहादुर एसी र समाजका महासचिव पास्टर डिल्लीराम पौडेलले अन्तर्राष्ट्रियस्तरका खिष्टियन संस्थाको विशेष बैठकले गरेको निर्णयअनुसार होसियारीपूर्वक अगाडि बढ्न सुसूचितसमेत गराएका छन् । ‘सम्पूर्ण ब्राह्मण तथा क्षेत्री समुदायका खिष्टियनहरूले आफ्नो घरमा आउने गणकलाई जातिमा खस र धर्ममा मष्ट लेख्न लेखाउन आफ्नो चर्चभित्रका विश्वासीलाई जानकारी दिन, साथै यस कार्यमा अझ होसियारीपूर्वक निरन्तर लागिरहनसमेत हार्दिक अनुरोध गर्दछौं,’ पत्रमा उल्लेख छ । समाजका महासचिव पौडेल केही समूह मिलेर क्रिश्चियनहरूको खोइरो खनिएको बताउँछन् । अन्य धर्मझैं क्रिश्चियनले जातीय विभेद, छुवाछुत, धनी, गरिबबीच भेदभाव गर्न नहुनेलगायतका राम्रो कुराहरू सिकाउने उनले बताए । ‘पैसाले किनेर क्रिश्चियन बनायो भन्छन्, मान्छे त्यतिसम्म नबुझ्ने त छैनन् होला, किनेको मान्छे कतिञ्जेल चर्चमा आउँछन् ?’ उनले भने । इसाई धर्मले अन्य धर्मलाई होच्याउने, गाली गर्नेलगायत कार्य नगर्ने उनको दाबी छ ।

**मन्दिरको शहरमा चर्च**

पछिल्लो समय चर्च बन्ने क्रम ह्वात्तै बढेको छ । मन्दिरको शहरका रूपमा परिचित तथा विश्वका करोडौं हिन्दू धर्मावलम्बीहरूको आस्थाको केन्द्र जनकपुरमा समेत ठूलो संख्यामा चर्च खुलेका छन् । यता, काठमाडौं, भक्तपुर, ललितपुर, काभ्रेपलाञ्चोक, धादिङ, मकवानपुर, कञ्चनपुरलगायत जिल्लामा पनि धेरै चर्च छन् । राष्ट्रवादी केन्द्र नेपालका महासचिव भुवन संग्रामले मुलुकमा ‘क्रिश्चिनियटी’ नभई ‘क्रिश्चियन मिसिनरी’ अभियान चलेको बताए । धर्म परिवर्तन गराउन खेल नै रचिएको उनको आरोप छ । ‘क्रिश्चियन धर्म फैलाउनका लागि मिसन नै चलाइएको छ । देशमा गौहत्या र मन्दिर तोडफोड पनि भइरहेको छ । धर्मनिरपेक्षताको नाममा हिन्दू, बौद्ध र किँरात धर्मावलम्बीलाई निरन्तर शिकार बनाइँदैछ ।

# मन्दिरमा समेत राजनीतिको मारामार

इलाममा सबैभन्दा धेरै आन्तरिक पर्यटक आउने धार्मिक पर्यटकीय स्थल पाथीभरामा यतिखेर भेटी अपचलनको विवाद चुलिएको छ । रोङ गाउँपालिका-३ मा अवस्थित पाथीभरामा मेची राजमार्गको सहजताका कारण पनि पूर्वका हजारौं मानिस आउने गर्छन् । पाथीभरा मन्दिर संरक्षणका लागि बनेको समितिले आर्थिक पारदर्शिता कायम गर्न नसकेको भन्दै २०७९ मा निर्वाचित गाउँपालिका अध्यक्ष मणिकुमार स्याङ्बोले नयाँ समिति मात्र बनाएनन् पुरानो समितिमाथि छानबिन गर्न जिल्ला प्रशासनलाई पत्रसमेत लेखे । प्रशासनले भने छानबिन होइन, नयाँ र पुरानो समितिबीचको विवाद समाधान गर्न गाउँपालिका अध्यक्ष र समितिलाई छलफलका लागि बोलायो । तर, पालिका अध्यक्ष स्याङ्बोले आफ्नो अधिकार क्षेत्र नबुझी पाथीभरा मन्दिरमा हिनामिना भएको सप्रमाण उपस्थित हुन पत्राचार गरेको भन्दै आफ्नो दायरा नबिर्सन प्रजिअलाई चेतावनी दिए । प्रशासनमा उपस्थित भएनन् ।

चर्को दबावपछि जेठ २३ गते सहायक प्रजिअ ध्रुवप्रसाद कोइरालाको संयोजकत्वमा पालिकाका अधिकृत सम्मिलित छानबिन समिति बन्यो । सो समितिले पुरानो समितिले ८८ लाखभन्दा बढी हिनामिना गरेको प्रतिवेदन तयार गरेर भदौ ३१ गते बुझायो । प्रशासनप्रति असन्तुष्ट अध्यक्ष स्याङ्बोले प्रशासनले उक्त प्रतिवेदन सार्वजनिक नगरेको भन्दै एक पत्रकार गरे । प्रतिवेदनमा ५ वर्षमा ३ करोड १४ लाख मात्र आम्दानी देखिएको, त्यसमा पनि ८८ लाख ८२ हजार २४ रूपैयाँको खर्च र मौज्दात नदेखिएको भन्दै भेटीको रकम हिनामिना भएको आरोप छ । यता पालिकाले भने आठ महिनामा एक करोड ६ लाखभन्दा बढी आम्दानी गरेको छ । यसले गर्दा पनि पाथीभरा मन्दिरमा चढाइएको भेटी, सुन चाँदी अनियमिता भएको पालिका अध्यक्ष स्याङ्बो बताउँछन् । पालिकाले गत फागुनदेखि पाथीभरा व्यवस्थापन समिति गठन गरेर आम्दानी र मन्दिर व्यवस्थापनको काम गरिरहेको छ । समितिका अध्यक्ष दिलिप राईका अनुसार यो अवधिमा ९७ लाख ५६ हजार रूपैयाँ नगद र आठ लाख ५४ हजार रूपैयाँको जिन्सी सामान अनुमानित आम्दानी भएको छ । नगद रसिदबाट १६ लाख ८९ हजार, दानपेटिकाबाट तीन लाख ९२ हजार तीन सय ७७, लिलाम बिक्रीबाट ११ हजार दुई सय २० र सिंहदेवी शिलाबाट चार लाख १० हजार रूपैयाँ आम्दानी भएको समितिले जनाएको छ । यता प्रमुख जिल्ला अधिकारी श्रवणकुमार पोखेलले भने आफू व्यस्त भएकाले प्रतिवेदन सार्वजनिक नगरेको बताएका छन् ।

रोङ गाउँपालकि पूर्व अध्यक्ष तथा वर्तमान प्रदेश सांसद समशेर राई र वर्तमान अध्यक्ष मणिकुमारबीचको आन्तरिक द्वन्द्वका कारण पनि पाथीभराको विवाद उत्कर्षमा पुगेको बताइन्छ । दुवै जना नेपाली कांग्रेसकै भए पनि फरक खेमाका भएकाले नयाँ र पुरानो समितिको पक्षमा लाग्दा विवाद बढ्दै गएको स्रोतको दाबी छ ।

## सरकारी...

दिनको अनुसन्धानपछि राजश्व अनुसन्धान विभागले सादा तारेखमा छाड्यो र उपचार गर्न भन्यो । त्यसबेला काठमाडौं जिल्ला अदालतका न्यायाधीशले राजश्वका कर्मचारीलाई हप्काउँदै भनेका थिए, ‘अस्पताल लैजानुपर्ने मान्छेलाई किन अदालत ल्याएको ?’ राजश्वले छानबिन गर्न नसकेर प्रहरीलाई फाइल जिम्मा लगाएपछि सिआइबीले पनि उपचारकै क्रममा घाँटी चिरिएकी र नियमित किमोथेरापी लिँदै गरेकी सुब्बालाई थुनामा राखेन, बाहिरै राखेर क्यान्सरको उपचार गर्न सुविधा दियो । अनुसन्धानका क्रममा दोषी नदेखेको र उनको आइडी अर्कैले प्रयोग गरेर सामान छुटाएको पाइएपछि सिआइबीले रुक्मिनामाथि मुद्दा चलाउन सिफारिस गरेन । तर, सरकारी वकिलको कार्यालयले भने चाइनिजको नाम काटेर रुक्मिनालाई २६ औं नम्बरको प्रतिवादी बनायो ।

सिआइबीले सरकारी वकिलको कार्यालयलाई भदौ २५ गते बुझाएको २३१ पृष्ठ लामो अनुसन्धान प्रतिवेदनमा चिनियाँ राहदानी बाहक लुओरोङ गोङ्बुलाई २९ औं नम्बरको प्रतिवादी बनाइएको थियो । चिनियाँ नागरिक दावा छिरिङ समातिनासाथ गोङ्बु भागेका थिए । उनी अहिलेसम्म फरार छन् । उनले ठमेलको होटल भियनामा सुन पगाल्ने केमिकल राखेको र सुन तस्करलाई बिक्री गरेको सिआइबीको अनुसन्धानबाट खुलेको छ । प्रहरीले टोखाबाट सुन गाल्ने मेसिन बरामद गरेपछि गोङ्बु र दावाबीचको सम्बन्ध खुलेको थियो । सो अनुसन्धानका आधारमा सिआइबीले तयार पारेको अभियोगपत्रमा गोङ्बुबारे लेखिएको छ, ‘अवैध सुन पैठारी गर्ने कार्यमा निज प्रतिवादीको प्रत्यक्ष संलग्नता रहेको पुष्टि हुन आयो ।’

तर, भदौ ३१ गते सरकारी वकिलको कार्यालयले तिनै २९ औं नम्बरका प्रतिवादी गोङ्बुको नाम हटाएर उन्मुक्ति दियो भने क्यान्सरपीडित चेलीको नाम २६ औं नम्बरमा फ्याट्ट घुसाइदियो । सरकारी वकिलको काँटछाँटपछि रुक्मिनालाई भदौ ३१ मै प्रहरीले हिरासतमा लियो । सरकारी वकिल कार्यालयले सिआइबीको अनुसन्धानविरुद्ध खेलो फड्को गरे पनि काठमाडौं जिल्ला अदालतले भने मानवीयता देखाएको छ- पक्राउ परेको भोलिपल्टै उसले उनीमाथि प्रारम्भिक सुनुवाइ सकाएर क्यान्सरको उपचार गराउने आदेशमार्फत ।

अहिलेसम्म सरकारी नियन्त्रणमै रहेकी ती चेली ललितपुरको हरिसिद्धीस्थित क्यान्सर अस्पतालमा आफ्नै खर्चमा उपचाररत छिन् । उनलाई कुर्न अस्पतालमै दुईजना महिला प्रहरी खटाइएको छ । तर, सरकारी वकिलले चाइनिज प्रतिवादीको नाम किन मेटाए भन्नेमा सिआइबीका अधिकारीहरू तीनछक्क परेका छन् ।

सरकारी वकिलको कार्यालयले काठमाडौं जिल्ला अदालतमा९ जना विदेशी र २० नेपालीसहित २९ जनालाई प्रतिवादी बनाएर दर्ता गरेको अवैध सुन चोरी पैठारी र संगठित अपराधसम्बन्धी मुद्दा विचाराधीन छ । २९ प्रतिवादीमध्ये ३ जना नेपाली फरारको सूचीमा छन् । चिनियाँ, भारतीय र बेल्जियम नागरिकका साथमा प्रतिवादी बनाइएका नेपालीहरूमा हर्कराज राई, कृष्णकुमार श्रेष्ठ, पुष्करराज भट्ट, राजेन्द्रकुमार राई,गणेशप्रसाद पौडेल, वीरेन्द्र नेपाली, कुमार ढकाल, यादव पराजुली, सुदर्शन गौतम, रुक्मिना सुब्बा, रामकुमार भुजेल, दिलिप भुजेल, सुमन खरेल, शिवकुमार सर्राफ, किशोर बस्नेत, सन्तोष चन्दर, सरोज श्रेष्ठ छन् । बाराका भोला साह सोनार, दावाकी पत्नी रोल्पाली अमला रोका र बर्दियाका जीवन चलाउने फरार छन् ।

## प्रचण्ड...

सँस्कार गर्ने तयारीमा जुटेको छ । मृतकका एक जना आफन्तले जनआस्थालाई बताएअनुसार भिसा लिने काम भइसकेको छ र तुरुन्तै जाने तयारी हुँदै छ । केही वर्षअगाडि कन्फ्युसियस इन्स्टिच्युटको निमन्त्रणामा गएका पोखराको एउटा निजी स्कूलका सञ्चालकको पनि बेइजिङमै हृदयाघातका कारण मृत्यु भएको थियो । उक्त समयमा शव नेपाल ल्याउनलाई लगभग ८० हजार युआन लागेको थियो । तर, अहिले त्यसको दोब्बर लाग्ने बताइएपछि आफन्तहरू चीनमै गएर अन्तिम संस्कार गर्नमा जुटेका हुन् । यतिबेला प्रधानमन्त्री चीनमै रहेकाले उनले शव फिर्ता पठाउन केही पहल गरिदिए हुने चाहना परिवारले राखेका थिए । तर, तुलाधरको मृत्यु भएको कुरा प्रचण्डको कानमा पुगेन अथवा थाहा पाएर पनि वास्ता गरेनन्, त्यसबारे विस्तृतमा जानकारी प्राप्त हुन सकेन ।

## दुई...

गर्न प्रस्ताव गरे पनि पावर ट्रेड एग्रिमेन्ट नगरुन्जेल लगानी सुनिश्चित नहुने भएकाले पहिला विद्युत् व्यापार सम्झौता गर्न चिनियाँ पक्षको आग्रह थियो । तर नेपालले भने त्यसमा इच्छाशक्ति नदेखाएको त सोमबार बेइजिङ दूतावासको विज्ञप्ति र भोलिपल्टै आएको संयुक्त विज्ञप्तिको तुलनात्मक भाषाबाट धेरै कुरा छर्लंग हुन्छ । प्रधानमन्त्री प्रचण्डले भारतलाई जस्तै समदूरीमा राख्न चाहेको भए नेपाल र नेपालीको हितमा महत्वपूर्ण काम हुन्थ्यो । चीनसँग समानान्तर रूपमा विद्युत् व्यापार सम्झौता गर्नेबित्तिकै भारत पनि दबाबमा रहन्थ्यो ।

स्मरणीय छ, नेपालको अरुण तेस्रो निर्माणमा सतलज कम्पनी, पश्चिम सेती र फुकोट कर्णालीमा एनएचपिसीजस्ता भारतीय सरकारको लगानी भएका कम्पनी संलग्न छन् भने यी आयोजनाको सुरक्षार्थ भारतीय फौजको इन्जिनियरिङ विभागमा काम गर्ने सैनिकलाई खटाउने तयारीसमेत गरिएको जानकारी विशेष स्रोतले दिएको छ । सिभिल ड्रेसमा बोर्डर सेक्युरिटी फोर्सका सुरक्षाकर्मीलाई आयोजनामा संलग्न गराउने प्रयास ६ महिनादेखि जारी छ ।

कांग्रेस आईनिकट आफ्नै देशको कम्पनी जिएमआरले पाएको नौ सय मेगावाट क्षमताको माथिल्लो कर्णाली जलविद्युत् परियोजनाबाट बंगलादेशलाई ५ सय मेगावाट बेच्नसमेत अनुमतिपत्र नदिने वर्तमान भारतीय सत्ताधारीले ग्लोबल टेण्डर प्रतिस्पर्धामा ४५६ मेगावाटको माथिल्लो तामाकोशी, ४५ मेगावाटको माथिल्लो भोटेकोशी र ३० मेगावाटको चमेलिया जलविद्युत् आयोजना हात पारेको चिनियाँ कम्पनीलाई अहिलेसम्म विद्युत् व्यापारको अनुमति दिनु त कल्पनाभन्दा बाहिरको कुरा । चिनियाँ राजदूत छन सोङले नेपाल र भारतबीच हुने विद्युत् खरिदबिक्रीमा नेपालले घाटा व्यहोरेकाले त्यसलाई पुनर्विचार गर्न खुला आग्रह गर्नु र भारतीय पक्ष चीनसँग नेपालको जलविद्युत् क्षेत्रमा कुनै पनि सम्झौता हुन नदिन झनै आक्रामक भई लाग्नु, यही बीच नेपाल दुई देशका निम्ति प्रतिस्पर्धाको रणमैदान बन्नु सामान्य संयोग मात्र होइन । स्मरण रहोस्, माथिल्लो भोटेकोशी आयोजनाको टेण्डरका चार प्याकेजमध्ये ३ वटा भारत सरकारकै लगानी भएको कम्पनी र एउटा चिनियाँ कम्पनीले हात पारेका थिए । तर, चिनियाँ कम्पनीले पनि सँगै काम गर्ने भएपछि तीन प्याकेजको कार्य अनुमति नलिइएको र चिनियाँ कम्पनीलाई पनि निर्माण कार्यको अनुमति नदिन दवाव दिइएको स्रोतको दाबी छ ।

त्यसो त तेस्रो देशको लगानी रहेको जलविद्युत् नकिन्ने भनेर भारतले नेपालको जलविद्युत् क्षेत्रमा एकलौटी वर्चश्व कायम राख्ने प्रयास जारी राखेको बेला चीनसँग सम्झौता भएको भए भारत पनि दबाबमा आउँथ्यो होला ।

## समयको...

*संकट आइलागेको चर्चाले राजनीतिक वृत्त गर्माएको छ । डा. भट्टराई संविधान बनेपछि माओवादी आन्दोलनको औचित्य सकिएको घोषणासहित आफैं उपाध्यक्ष रहेको तत्कालीन एकीकृत माओवादीलाई 'रातो स्टिकर टाँसेको घर' को संज्ञा दिँदै पार्टी छाडेर हिँडेका थिए । कम्युनिष्ट विचारधारा पुरानो भएको निश्कर्षसहित 'नयाँ गर्न' हिँडेका उनले पार्टीको नाम पनि नयाँ शक्ति राखेर प्रारम्भका दिनमा राम्रै तामझाम गरे । तर, लगत्तैको निर्वाचनमा जनताले अस्वीकार गरेपछि नयाँ शक्तिलाई क्षेत्रीय पार्टीमा बिलय गराएका बाबुराम त्यता पनि लामो समय टिक्न सकेनन् । 'घुम्दै फिर्दै रुम्झाटार' भनेझैं उपेन्द्र यादव नेतृत्वको जनता समाजवादीबाट फुटेर आफ्नै नेतृत्वमा नेपाल समाजवादी पार्टी गठन गरेको वर्ष दिनमै माओवादीसँगको एकतालाई लिएर उत्पन्न मतभेदले फेरि एक्लिने अवस्था बनेको छ ।*

*जानकार स्रोतले बताएअनुसार नेसपाका अर्का अध्यक्ष महिन्द्रराय यादव र उपाध्यक्ष गंगानारायण श्रेष्ठसहितको ठूलो पंक्ति तत्काल माओवादी केन्द्रसँग एकता गर्ने पक्षमा छ । नेसपाले पार्टी एकता गर्ने सहमतिसाथ माओवादीकै चुनाव चिह्नमा आफ्ना उम्मेदवार उठाएको थियो । संघ र प्रदेशमा नेसपाका दुई-दुई जना सांसद छन् । केन्द्रका खानेपानी मन्त्री महिन्द्रराय र बाग्मतीका आन्तरिक मामिलामन्त्री गंगानारायण माओवादीकै चिह्नबाट सांसद चुनिएका हुन् । दुई पार्टीले कार्यदलस्तरमा छलफल गरेर एकता प्रक्रिया थालेको पनि थियो । तर, केही राजकीय पदमा चाहना राखेका बाबुराम प्रचण्डले धोका दिएको निश्कर्षमा पुगेपछि एकता प्रक्रिया रोकिएको सो पार्टीका एक नेताले बताए ।*

*बताइएअनुसार आफ्नो निर्वाचन क्षेत्र गोरखा-२ प्रचण्डलाई सुम्पिएर चुनावी राजनीतिबाट बाहिर बसेका बाबुरामलाई विकास प्राधिकरण गठन गरी त्यसको जिम्मा दिनेबारे तत्कालीन पाँच दलीय गठबन्धनमा सल्लाह भएको थियो । तर, चुनावपछि प्रधानमन्त्री भएका प्रचण्डबाट त्यो काम भएन । त्यसपछि बाबुरामलाई राष्ट्रपतिको आश्वासन दिएर थामथुम पारियो । माओवादीको भागमा पर्ने भनिएको उपराष्ट्रपतिमा हिसिला यमीलाई लैजाने बचन पनि पूरा भएन, उल्टै उपेन्द्रको पार्टीलाई उपराष्ट्रपति दिन प्रचण्ड तयार भएपछि बाबुराम थप बिच्किए । परिणामतः समाजवादी मोर्चाबाट बाबुराम बाहिर रहने स्थिति बन्यो भने पार्टी एकीकरणको समग्र प्रक्रिया पनि अन्योलमा पऱ्यो ।*

*यसैबीच, हालै बाबुराम देशबाहिर रहेका बेला माओवादी केन्द्रले महेन्द्रराय यादवलाई पत्र पठाएपछि दुई पार्टीको एकतालाई लिएर विभिन्न चर्चा हुन थालेको छ । बाबुराम एकता नगर्ने निर्णयमा पुगेपछि महिन्द्रराय र गंगानारायणकै आग्रहमा पत्र गएको माओवादी स्रोतले दाबी गरेको छ । पत्रमा पार्टीको नाम फेर्न तयार रहेको संकेत माओवादीले दिएको अर्थ पनि त्यही हो भनिँदै छ । जुन महिन्द्रराय र गंगानारायणकै मागअनुसार गरिएको बताइन्छ । 'पार्टी एकता गर्ने भएपछि हामी माओवादी प्रवेश गरेको अर्थ नलागोस् भनेर उहाँहरूले भन्नुभएको थियो, सोहीअनुसार निर्णय गरेर महिन्द्रजीलाई पत्र पठाइएको हो', माओवादी केन्द्रका एक नेताले भने ।*

*लोकप्रियतावादको आवरणमा नयाँ राजनीतिक दलको उदयले राजनीतिक उपलब्धि उल्टिने खतरा बढेको हुँदा गणतन्त्र, धर्मनिरपेक्षता र संघीयताका पक्षधर शक्ति एकजुट हुनुपर्ने र त्यसका लागि माओवादीसँग निःशर्त एकता गर्नुपर्ने मत पनि छ, नेसपामा । विगतमा त्यही पार्टीमा लामो समय काम गरेको र पछिल्लो चुनावमा यौटै झण्डा बोकिसकेकाले माओवादीमै एकताबद्ध हुन अप्ठ्यारो मान्न नहुने तर्क गर्नेहरू पनि छन् । तर, महिन्द्रराय र गंगानारायणले पार्टी प्रवेशको अर्थ नलाग्ने गरी निर्णय लिइदिन आग्रह गरेमुताविक नै प्रचण्ड माओवादीको नाम फेर्न तयार रहेको पत्र पठाएकाले अब 'नेकपा' पछाडि समाजवादी फुर्को झुण्ड्याएर एकता हुने सम्भावना बढेको बताइएको छ ।*

## किन...

नदिनका निम्ति कस्तो नीति अवलम्बन गर्ने भन्ने कुराको केही प्रगति छैन । फलस्वरुप, फेरि अर्को तरिकाले सुन तस्करी भयो भने अचम्म मान्नु नपर्ने भएको छ ।

संसदीय समितिले सबै कुराको छानबिन गर्ने भए पुलिस किन चाहियो ? जसरी ३३ किलो सुनको छानबिनमा गृहका सहसचिव ईश्वरी पौडेलको संयोजकत्वमा गरिएको छानबिन असफल भयो, असम्बन्धित पात्रहरूलाई दिन नहुने काम दिँदा भोलि पनि त्यही परिणती हुने हो । त्यसबेला गृहमा प्रहरी, वकिल, राजश्व सबै बोलाएर छानबिन गरिएकै हो । तर, मुद्दा लाने आयोगबाट हुँदै हैन । संसदीय समिति अनुसन्धान अधिकृत हुने हो भने पनि त्यसको निम्ति कानुन हुनुपर्छ । सांसदले अनुसन्धान गर्ने कुरा आफैंमा हास्यास्पद छ ।

उता, सम्पत्ति शुद्धिकरण अनुसन्धान विभागका महानिर्देशक त पटक पटक फेरिए, तर उसले जे काम गर्नुपर्ने हो, त्यसका लागि न कानुन, न संयन्त्र, केही बनेको छैन । प्रहरीको एसपी दर्जाको नेतृत्वमा केही दर्जन प्रहरी त्यहाँ दिनहुँ हाजिर हुन्छन् । तर, काम छैन । मुद्दा र उजुरीको चाङ छ, हेर्ने ह्याउ छैन । धन्न, इन्टरनेशनल मनि लण्डरिङ युनिटले नेपालको हकमा राम्रो नम्बर दिएको छ । चार वटा टेक्निकल कम्प्लाइनमध्ये नेपाल अप्ठ्यारोमा नपर्ने स्थिति छ । १२ वटामा राम्रो अंक आएको छ । त्यसअन्तर्गत प्रभावकारिता र प्राविधिक मूल्यांकन हुने गर्दछ । प्राविधिक मूल्यांकनमा कानुन, विधि, प्रक्रिया, कर्मचारी र काम गर्ने संयन्त्र हुन्छन् । प्रभावकारिताको मूल्यांकन कामको परिणामसँग सम्बन्धित हुन्छ । नेपालको मुख्य समस्या प्रभावकारितामा हो । एकातिर समस्या नै समस्या, अर्कातिर सुविधा प्रशस्तै । राष्ट्रबैंकको एफआइयुले दिएको सूचनाअनुसार मुद्दा चलेको एउटै उदाहरण छैन ।

## हिमालतिर...

लाग्ने कुरामा होडबाजी शुरु हुनु स्वाभाविकै हो । सोमबार बिहान जनआस्थाकर्मी पर्यटन विभागमा छँदा लिआओ अफिसर बनेर जानका लागि कांग्रेसनिकट कर्मचारी ट्रेड युनियनका उपाध्यक्ष उत्तम कटवालको मान्छे हुँ भन्दै हरिबहादुर क्षेत्री झुल्किएका थिए । उनी वीरेन्द्रनगर नगरपालिकातिर लेखा अधिकृतका रुपमा कार्यरत छन् । यस्तै, पर्यटनसचिव भरतमणि सुवेदीले पठाएको भन्दै रामप्रसाद भुषाल र गणेश कटवालहरू त्यहीं थपिए । यसरी दैनिक १५ देखि २० जना कर्मचारी हिमाल जान पाऊँ भन्दै त्यता पुग्ने गरेका छन् । विभिन्न मन्त्रालयबाटै नोमिनेसन गरेर पठाइनेको संख्या पनि उत्तिकै छ । एक अधिकृतले जनआस्थालाई बताए अनुसार '६ सय हाराहारी कर्मचारीको नाम त्यसरी नोमिनेसन भएर आएको छ । आरोहीको संख्या ६ सय छैन, सम्पर्क अधिकृतका निम्ति ६ सय बढीको मनोनयन आइसक्यो ।'

अर्कोतिर मन्त्री, सचिवदेखि ट्रेड युनियनको आडमा हिमाल गएर आधार शिविरसम्म नपुगी फर्कने रोग उस्तै छ । अघिल्लो आर्थिक वर्ष ११५ जना अफिसर गएमध्ये केही त बीचबाटै फर्किएका थिए । स्वयं पर्यटनमन्त्री सुदन किरातीको निजी सचिव डा. डिजन भट्टराई हेलिकप्टर चढेर आधार शिविरसम्म पुगे र मोडलिङ गरेर फर्किए । तलबाट पर्यटकको उच्छृंखल गतिविधि रोक्न नसकेको गुनासो विभागदेखि मन्त्रालयसम्म पुग्यो तर मन्त्रीकै स्वकीयलाई छुने, कारबाही गर्ने हिम्मत कसको ?

सम्पर्क अधिकृत आधार शिविर नगएको भेटिएमा पर्यटन ऐन, २०३५ को दफा २० र पर्वतारोहणसम्बन्धी नियमावली, २०५९ को नियम ९ बमोजिम कारबाही हुने व्यवस्था छ । विभागलाई खटाएको स्थानमा पुगेको कागजात, फोटो भिडियो बुझाउनुपर्छ पनि भनिएको छ । कुनै पनि विदेशीले आरोहण गरेको वा नगरेको प्रमाणित गर्ने अधिकार जियाजो अफिसरलाई हुन्छ । तर, विडम्बना जसले हिमाल आरोहण गरेको भनी प्रमाणित गर्छ, ऊ आफैंचाहिँ हिमाल चढ्दैन । यसमा नवनियुक्त महानिर्देशक चक्रबहादुर बूढाले लगाम लगाउन सक्छन् वा उनी पनि ट्रेड युनियन र मन्त्री/सचिवका अगाडि निरीह बन्छन्, हेर्न बाँकी नै छ ।

## नेपाल...

भाषाको पढाइ हुन्छ । चिनियाँ विदेश मन्त्रालयदेखि सरकारी चाइना रेडियो इन्टरनेशनलमा पनि नेपाली भाषाका जानकारहरू छन् । अनुवादै गरेर पनि चीनका आफ्नै मौलिक जनशक्ति छन् । प्रचण्डले १६ सय वर्ष पुरानो बिरासत बोकेका दुई देशमा अनुवादै गरेर अंग्रेजी बोलिरहनुपर्ने थिएन । नेपाल-चीन १४१४ किलोमिटर सीमा जोडिएका देश हुन् । दुई देशबीच राज्य तहको सम्बन्ध पाँचौं शताब्दीबाटै शुरु भएको हो भने जनस्तरको प्रमाणित सम्बन्ध १६०० वर्ष पुरानो देखिन्छ । यत्ति पुरानो बिरासत भएको दुई देशले आफ्नै भाषा बोलेर आफ्ना कुरा राख्न सक्नुपर्ने थियो । प्रधानमन्त्रीले त्यसो गरेनन् । दुई देशको संवाद मात्रै होइन यो पालीको आगमनमा पनि तेस्रो पक्ष नै जोडियो । प्रधानमन्त्रीको रूपमा तेस्रोपटक आउँदा प्रचण्डले सिधा उडान गरेनन् । यात्राको सूची सार्वजनिक गरेपछि नेपाली कांग्रेस सरकारको पालामा चीनको राजदूत भएका राजेश्वर आचार्यले यो गलत भएको टिप्पणी गरेका थिए । अमेरिकाबाट नेपाल आएर गएको भए राम्रो सन्देश जाने उनको तर्कमा दम थियो । आचार्यले चीनसँग विश्वासको वातावरण हुनुपर्नेमा जोड दिएका थिए । शनिबार भएको प्रचण्ड र सि वार्तादेखि नेपाल र चीनबीच भएका १२ बुँदे सम्झौता हेर्दा कुनै देखिने वा कायापलट हुने खालका बुँदा छैनन् । न त बिआरआईमा नेपाली हित हुने परियोजनाहरू जोडिए । न त चीनसँग ऊर्जामा क्रान्ति हुने खालका सम्झौता हुने भनेर विज्ञापन गरेकै कुराहरूले स्थान पाए । सोमबार बेइजिङमा प्रचण्डले पाएको गार्ड अफ अनशरदेखि सिसँग भेटघाटको तह झल्काउने खालका काम सम्झौताका बुँदामा देखिएका छैनन् । कुनै ठोस र देखिने खालका भन्दा अमूर्तजस्ता बुँदाले नेपाल र चीनमा विश्वासको संकट भएको देखाएको छ ।

## त्यो...

र देउवाले विजय मिश्रलाई च्यापेको स्थिति छ । माओवादीबाट डिएन पराजुलीको दाबी यथावत् छ भने पदम वैदिक पनि कुदाकुदमै छन् । शालिकराम सापकोटासमेत लाइन लागेर बसेका छन् । अर्कोतिर, सर्वोच्चमा न्यायाधीशहरू घर जाने अर्को क्रम शुरु भएको छ । अनिलकुमार सिन्हाले मुद्दा हेर्न छाडिसकेका छन् । ईश्वरप्रसाद खतिवडा पनि मंसिरसम्ममा जानेछन् । उनी गएपछि दिनमणीलाई ल्याउने कि भन्ने पनि छ । यसपछि आनन्दमोहन भट्टराई जेठमा जाँदैछन् । दिनमणि सर्वोच्च गएमा महान्यायाधिवक्ता बन्न रमणकुमार श्रेष्ठ, मुक्ति प्रधान र तुलसी भट्टको दौडधुप शुरु हुने बताइन्छ ।

चोलेन्द्रसमशेरको पालामा एकपटक उपत्यका बसिसकेकालाई दोहोऱ्याएर नदिने नीति थियो । अहिलेचाहिँ त्यो फेरिएको छ । उदाहरण हुन् शिशिर ढकाल र राजन भट्टराई । महान्यायाधिवक्तालाई जस्तै मुख्यरजिष्ट्रारलाई पनि न्यायाधीश बनाएर सर्वोच्च छिराउने धन्दा शुरु भएकै थियो । प्रधानन्यायाधीशले आफूले चाहेको कर्मचारीलाई तानतुन पारेर अनि प्रधानमन्त्रीले आफूनिकट वकिलबाट सर्वोच्चमा लैजाने । देशमा पदको दुरुपयोग यसरी भइरहेको छ । फलतः क्याडर जजहरू मर्कामा परेको गुनासो पोख्दैछन् । फैसला विशेषमा आधारित भएर न्यायाधीशमाथि व्यवहार हुन थाल्दा न्यायालयमा झन् असन्तुष्टि बढ्दो छ ।

नक्कली भुटानी प्रकरणमा पूर्वमन्त्री बालकृष्ण खाँण र टोपबहादुर रायमाझीहरूलाई पुर्पक्षका लागि जेल चलानको आदेश दिने काठमाडौंका जिल्ला न्यायाधीश प्रेमप्रसाद न्यौपाने एक वर्ष नपुगी रुकुम धपाइए । अनि, हालका कानुनमन्त्री धनराज गुरुङको क्षेत्र स्याङ्जा- २ मा बहुचर्चित 'पितृले भोट हालेको' कामलाई सदर गर्ने भनिएका सरकारी वकिल रामचन्द्र शर्मालाई न्यायाधीश बनाएर घरपायक हुने गरी पोखरा पोस्टिङ गरिएको छ । त्यस्तै, काठमाडौंबाटै दयाराम ढकाललाई पनि एक वर्षमै डडेलधुरा पुऱ्याइँदा प्रकाश ढुंगानालाई नवलपरासीबाट अछाम लखेटिएको छ । सामान्यतया न्यायाधीशले एक जिल्लामा दुई वर्ष काम गर्न पाउने प्रचलन छ ।

पछिल्लो पटक स्याङ्जाको क्षेत्र नं. २ मा धाँधली भयो भनी एमालेकी उम्मेदवार पद्मा अर्यालगायतले उजुरी हालेकोमा छानबिन गर्दा एमालेले चार-पाँच र कांग्रेसले आठ-नौ ठाउँमा प्रेमपूर्वक भोट हालेको भेटियो । निर्वाचन सकिएलगत्तै कहाँ, कति मतदान भयो भनी रिपोर्टिङ लिने काम हुन्छ । जहाँ जसको मत बढी हुन्छ, त्यहाँ अर्कोले धाँधली भयो भन्ने त सनातन धर्म नै हो । निर्वाचन आयोगले चाहिँ सोही दिन तत्काल केही भयो भने घटनास्थलमै मान्छे पठाउने र त्यहीं छिनोफानो गर्ने आन्तरिक सहमति बनाएको थियो । त्यसमध्ये गुल्मीको समस्यामा पर्सिपल्ट पुनः मतदान गराउने प्रतिवेदन आयो । पूर्वी नवलपरासीमा पनि ठाउँका ठाउँ पुनः निर्वाचन गराउने सहमति बन्यो । बाजुराको एक ठाउँमा त्यस्तै भयो । दोलखामा चार ठाउँमा समस्या देखिएपछि काठमाडौंबाट टोली पठाउनुपर्ने भयो । त्यहाँ मतपत्रको मुठा मुठा नै समातेर फ्याँकेको भेटियो । चार ठाउँ भनिए पनि सातै ठाउँमा पुनः मतदान भयो । स्याङ्जामा दिउँसो ४ बजे हाम्रा मान्छे लखेटिए भनेर पद्मा पक्षले दावी गरेको थियो । तर आयोगको टोली जाँदा त्यहाँ बिहान एमालेको प्रतिनिधिले ठीक भनेर सही गरेको छ । बेलुकी पनि त्यस्तै कागजमा सही गरेको छ । अनि, पछि एमाले भन्छ, 'हाम्रो प्रतिनिधि किनियो !, निर्वाचन आयोगको प्रश्न थियो, 'कतै ९० प्रतिशत मतदान भयो भन्ने नाममा कसरी पुनः मतदान गर्ने ? मतदान गरुन्जेल सबै दलका प्रतिनिधिले सहमति जनाएका छन् । आयोगमा उजुरी परेपछि जिल्ला निर्वाचन कार्यालयलाई सोध्दा शुरुदेखि सबै प्रक्रिया दुरुस्त छ । त्यही ढंगले मतपेटिका प्राप्त भएको छ । अब त्यहाँ टोली पठाउने कि नपठाउने भन्ने विषयमा गलफत्ति चल्दा पठाउने भए अरुमा पनि पठाउने कुरा आयो । अर्को पक्षले पर्दैन भन्यो । बहुमतबाट निर्णय गर्नेमा आयोग पुग्यो । त्यसमा तीन-दुई भयो । त्यसबेला त्यहाँका निर्वाचन अधिकृत थिए, तत्कालिन सरकारी वकिल तथा गत मंगलबार न्यायपरिषद्द्वारा न्यायाधीश नियुक्त रामचन्द्र शर्मा । भनिन्छ, निर्वाचन अधिकृत र सिडिओ दुबै एमाले पक्षधर थिए । सिडिओ त पद्माले नै दोहोऱ्याएर लगेको भनिन्छ । चित्रबहादुर केसीले जितेको बाग्लुङमा पनि धाँधली भयो भनी उजुरी आएकै हो । बुझ्दा केही भेटिएन । धाँधली दुबै पक्षले गर्ने । जसले बढी गऱ्यो, उसका विरुद्ध कम धाँधलीवालाको उजुरी पर्ने अचम्मको रोग कतै छ भने त्यो नेपालमै छ ।

## अचम्मैसित...

बढाएको छ । स्रोतका अनुसार उनलाई ३५ दिनको समयसहित एकपल्ट सफाइ पेश गर्न मौका दिइएको छ । निजामती सेवा ऐन, २०४९ अनुसार बिना जानकारी कुनै सरकारी कर्मचारी लगातार ९० दिन पदाधिकार रहेको कार्यालयमा अनुपस्थित रहेमा सफाइको मौका दिने र स्पष्टीकरण चित्तबुझ्दो नभए कारबाही प्रक्रिया अघि बढाउन बाटो खुला छ । 'करिब-करिब कारबाहीमा जाने स्थिति हो । ऐनअनुसार प्रक्रिया अघि बढिसकेको छ,' मन्त्रालय स्रोतले भन्यो । मन्त्रालयका सचिव र कर्मचारीले पनि गैरेको फेसबुकबाटै विदेशमा रहेको थाहा पाएको बताइएको छ ।

गैरेले हालसम्म मन्त्रालयलाई स्पष्टीकरणको जवाफ पनि फर्काएका छैनन् । निजामती सेवा ऐनअनुसार चित्त बुझ्दो प्रष्टीकरण नदिएमा वा सम्पर्कमा नआएमा जागिरबाटै बर्खास्त गर्न सकिने व्यवस्था छ ।

## यो कुरा...

बहुमतको सरकार बनाउन सक्दैन । अहिलेका प्रमुख ५ वटा दलमध्ये कुनै दुईबीच एकता भएको अवस्थामा भने बहुमत आउन सक्छ, जस्तो माओवादी र एमाले मिल्दा बहुमत थियो । समानुपातिक चुनाव प्रणालीका कारण सधैं हङ्ग पार्लियामेन्ट रहने र त्यसले सरकारको स्थायित्व नहुने स्थिति छ । जब सरकारको स्थायित्व हुँदैन भने राज्यका नीति, निर्णय प्रक्रिया, विकास निर्माणका काम प्रभावित हुने नै भयो । अर्कोतिर पछाडि पारिएका जातजाति, भाषा, धर्म र समुदायका मानिसलाई राज्यको मूल प्रवाहमा ल्याउन समानुपातिक निर्वाचन प्रणाली संविधानमा व्यवस्थित गरिएको हो । तर, दलहरूले त्यसको मूल मर्मलाई आत्मसात गर्न नसक्दा यो आफैंमा बद्नाम भैरहेको छ । दलहरूको इज्जत धान्ने माध्यमजस्तो बनेको छ । २०६४ को संविधानसभा निर्वाचनमा माओवादीले प्रत्यक्षमा १२० सीट जित्यो, कांग्रेस-एमाले २६-२७ सिटमा खुम्चिए । तर, समानुपातिकले उनीहरूको इज्जत धान्यो । दोस्रो संविधानसभा निर्वाचनसम्म आइपुग्दा प्रत्यक्षमा निकै तल झरेको माओवादीलाई समानुपातिकले बचायो । पछिल्लो चुनावमा ७ सिट प्रत्यक्ष जित्ने रवि लामिछानेको पार्टीले समानुपातिकबाट १४ ल्याएर २१ जित्यो । राप्रपाले पनि त्यसरी नै १४ सिट पुऱ्यायो । एकनाथ ढकाल, मोति दुगड, बिनोद चौधरी, दिवाकर गोल्छा, राजेन्द्र खेतान, राज्यलक्ष्मी गोल्छा, महेन्द्र शेरचनजस्ता हुनेखानेहरूलाई माननीयको लोगो भिर्ने माध्यम बन्यो समानुपातिक ।

सँगसँगै राजनीतिमा खुबी र क्षमता नभएका मान्छे समानुपातिकमा हाबी भएका छन् । दलका शीर्ष नेतालाई कुस्त रकम बुझाएर सांसद किनबेच गर्ने खेलले सिंगै राजनीति बद्नाम छ । उदाहरणका लागि जनताले ढाकाकुमारलाई भोट हालेको हैन, तर उनी सांसद बनेर आए । यसले जनताको सार्वभौमिक अधिकारलाई कुण्ठित गऱ्यो । यौटै संसदभित्र प्रत्यक्ष निर्वाचित र समानुपातिक सांसदबीच विभेद हुनु यो प्रणालीको अर्को खोट हो । दुबैका लागि लोगो, सुविधा उही तर प्रत्यक्ष चुनिएका सांसदले मात्र सांसद विकास कोषमार्फत पाँच करोड पाउँछ । यसलाई विभिन्न अध्ययन रिपोर्टले पनि विभेदपूर्ण व्यवहार भनेको छ । अब विकल्प के त ? निर्वाचन प्रणाली बदल्ने कि संसदीय व्यवस्थाको विकल्प खोज्ने ? यी दुई विकल्पमा सरोकारवालाहरूको बहस केन्द्रित छ । पहिलो विकल्पमा प्रतिनिधिसभालाई पूर्ण प्रत्यक्ष बनाएर राष्ट्रिय सभालाई समानुपातिक बनाउने । त्यसका लागि संविधानको मर्मअनुसार प्रत्यक्षतर्फको उम्मेदवारीकै क्रममा समानुपातिक, समावेशी बनाउने । पूर्ण प्रत्यक्ष हुँदा कुनै एउटा दलको बहुमत पुग्ने सम्भावना रहन्छ । संसदीय प्रणालीमै जाने हो भने यो नै उत्तम विकल्प हो ।

अर्को, संसदीय व्यवस्थामै फेरबदल ल्याउने हो भने संसदलाई सम्पूर्ण रूपले समानुपातिक बनाएर प्रत्यक्ष निर्वाचित कार्यकारी प्रणाली अवलम्बन गर्न सकिन्छ । उसले आफ्नो इच्छाअनुसार तोकिएको संख्याको क्याबिनेट बनाउँछ । माओवादी केन्द्र, जसपा, राप्रपालगायत दल यो प्रणालीको पक्षमा छन् । तर, कांग्रेस र एमालेले संसदीय प्रणाली फेर्ने कुरा सजिलै मान्ने सम्भावना देखिन्न ।

## खवरदार...

पछिको कुरा हो । तर, यो मैले भनेको कुरा अफ द रेकर्ड हो । पत्रकारिताको धर्म निर्वाह गर्नुहुन्छ भने यो कुराको विचार गर्नुहोला ।'

संविधानको प्रस्तावनामा के लेखियो ठूलो कुरा होइन । संविधान आफैंमा के भन्दै छ ? त्यसले पनि खासै अर्थ नराख्ने रहेछ । ०४७ सालको संविधान जारी भएपछि संविधान बनाउनेहरू नै जिम्मेवार भएनन् । राजालाई अथवा राजाको नाम लिएर आफ्नो चलखेल गर्ने दरवारियालाई त्यसपछि खुकुलो भयो । दरवारियाको स्वार्थपूर्ति गर्ने विदेशी बिचौलिया सुजाता कोइरालामार्फत गिरिजाप्रसाद कोइरालाको सरकारमा आफ्नो पहुँच बढाउन सफल भए । नेपाली कांग्रेसभित्र बाहुन र नेवारबीच कहिल्यै नदेखिएको खाडल खन्न दुर्गेशमान सिंह, जो तत्कालीन सर्वमान्य नेता गणेशमानका भतिज थिए, कारक भए । कृष्णप्रसाद भट्टराई निरीह थिए । तर, दरबारको चामल खाएका कांग्रेसीहरू भट्टराईनिकट थिए । कांग्रेसको बहुमतको सरकार ढलेर मध्यावधि चुनाव हुनुको कारण संविधान होइन, कांग्रेसी कलह थियो । 'यो बिराटनगरे लुरे बाहुनलाई टिक्न दिनु हुन्न,' दरवारिया र एकथरी कांग्रेसीको स्वार्थ त्यो बेला ठ्याक्कै मिलेको थियो । सुजाता कोइरालाको आगमनले त्यो आगोमा घ्यू थप्ने काम गऱ्यो ।

मध्यावधि चुनाव हुँदै गर्दा ०४७ को संविधान लेख्ने प्रधानन्यायाधीश विश्वनाथ उपाध्यायको मुटु चलाउन प्लाष्टिकको पेस मेकर लागिसकेको थियो । एक साँझ उनको ज्ञानेश्वर नजिकको घर पुग्दा दिग्दार भएर उनले मलाई भनेका थिए, 'यी पोलिटिसियन सब चुतिया हुन् । आफ्नो अधिकार 'डेलिगेट' गर्न मन छैन, संविधानलाई दोष दिन्छन् ।'

त्यो बेलादेखि अहिलेसम्म खोलामा धेरै पानी बगिसक्यो । तर, पुल जहाँको त्यहीं छ । गिरिजाप्रसाद कोइरालालाई परास्त गरेर कृष्णप्रसाद भट्टराईले टेको दिएका शेरबहादुर देउवाले आफ्नो व्यक्तिगत लिप्साका खातिर कहिले अतिवादी दक्षिणपन्थी दरबारियासँग हात मिलाए, कहिले अतिवादी कम्युनिष्ट माओवादीसँग ! माओवादी प्रतिनिधिमण्डलको नेतृत्व गर्दै बाबुराम भट्टराई सिंहदरबारमा देउवालाई ४० बुँदे चेतावनी पत्र बुझाउन आउँदा शायद देउवा अघिल्लो रातको मातमा थिए । यो भारतले उचालेको नयाँ उपक्रम हो भन्ने कुराको भेउ पाएनन् । माओवादी नामको विदेशी आतंकले एक दिन कांग्रेस फुट्नेछ भन्ने कुरा देउवाको दिमागले बुझ्न संभव थिएन । बुझेन ।

टेकुको भाडामा लिएको घरमा कांग्रेसको अफिस थियो । केन्द्रीय समितिको बैठकबाट निस्किएका प्रदीप गिरिलाई मैले सोधेको थिएँ, 'के भयो दाइ ?' 'राप-ताप बढी, प्रकाश कम' गिरीले भने । देउवा आए, 'मेरो कुरा मिलेन,' भन्दै हिँडे । गिरिजाप्रसादको अनुहार हेर्नलायक थियो । रातो र क्रोधित । त्यही रात संसद भंग भयो । आपतकालीन कानुन लागू भयो । कांग्रेसले देउवालाई निश्कासन गऱ्यो । कांग्रेस दुई चोइटा भयो । यसमा नेपालको संविधानको कुनै दोष थिएन । अहिलेको संविधान पनि दोषरहित छैन । तर दोष भारतले देखाएको छ । भारतको चाहना नै एक मधेश, एक प्रदेश होस् भन्ने थियो । मधेशका मजदुर, किसानले नबुझेको कुरा के भने उनीहरूका नेता आफ्नो निहित स्वार्थका लागि पहाडिया राष्ट्रवादीसामु समर्पण भावमा प्रस्तुत हुन्छन् । मधेश आन्दोलनमा शहीद भएका ५० जनाको शिर ठड्याउन मधिशे नेताले के गरे ? यो प्रश्न सोधिनु जरुरी छ ।

अमरेश सिंहको अगुवाइमा टिकापुर नरसंहार भएको हो । स्थानीय थारू सामन्त रेशम चौधरीमार्फत भारत देउवालाई अखण्ड सुदूरपश्चिम मान्य हुँदैन भन्ने सन्देश दिन चाहन्थ्यो । जो उसले दियो । कोशी प्रदेशविरोधी आन्दोलन पहिचानका कारण हो भन्ने धेरैलाई लागेको छ । कतिपय विद्वानहरू यसलाई बाहुन र जनजातिबीचको द्वन्द्वका रूपमा चित्रित गर्छन् । तर, यो पनि रौतहट काण्डजस्तै भारत प्रायोजित बखेडा हो । लिम्बुवानको खान्की मात्रै ठूलो हो, दिमाग कता-कता संकुचित छ । नेपालमा भर्खरै संविधान दिवस सकियो । तर, कुरा संविधानको होइन । मान्छेको जागृतिको हो । मान्छे मानवताका लागि बाँचेको छ कि महत्वाकांक्षाका लागि ?

## मन्त्री...

समितिको अध्यक्ष उनै हुन् । श्रीमती सुशीला सांसद मात्र नभई उक्त विद्यालयको संस्थापक प्रिन्सिपल छिन् । १२ कक्षासम्म पठन पाठन हुँदै आएको सो विद्यालयले झण्डै आधा रोपनी सरकारी जग्गा हिनामिना गरेको वडावासीको आरोप छ । विद्यालयले १० आना जग्गा र सार्वजनिक बाटोसमेत मिचिरहेको छ ।

अशोकको विद्यालयले १४ आना जग्गाको तिरो तिर्दै आएको छ । विद्यालयले ओगटेको कित्ता नम्बर १५५, १८८ र ४९० मा करिब १४ आना जग्गा रहेको देखिन्छ । एमालेबाट पटक-पटक मन्त्री र सांसद भएका र हाल जसपामा आबद्ध राईले कर्मचारी र जनप्रतिनिधिसँगको मिलेमतोमा भवन निर्माण सम्पन्न प्रमाणपत्र लिँदा १ रोपनी ५ आना १ दाम जग्गाको लिएको एक जनप्रतिनिधिले बताए । स्वप्नबाटिकाले चार तले भवनको स्वीकृति लिएर ६ तलामा स्कूल चलाइरहेको छ तर फुटपाथका व्यापारीहरूले बाटो मिचेको देख्ने बालेन साहले बहालवाला मन्त्रीकै स्कूलले १० आना जग्गा र सार्वजनिक बाटो मिचेको देखेका छैनन् । सानो केटाकेटीलाई पौने मीटर, ठूलोलाई कम्तिमा प्रति बच्चा एक मीटर स्पेश पाउनुपर्छ तर आवासीय प्रयोजनका लागि बनाइएको घरमा चलाइएको विद्यालय मापदण्डअनुसार नभएको बताइएको छ । यसरी सरकारी जग्गा हडपेर साढे दुई दशकदेखि विद्यालय चलाउँदै आएको भन्दै मंगलबार बिहानै अखिल (क्रान्तिकारी)ले ताला ठोक्नुका साथैं कालोव्यानर राखेको छ ।

स्वार्थ बाझिने गरी स्कूल सञ्चालकलाई शिक्षा मन्त्री बनाइँदा हालै संसद्मा दर्ता भएको शिक्षा विधेयकमा समेत त्यसको प्रतिविम्ब देखिएको शिक्षा मन्त्रालयकै उच्च अधिकारीले प्रतिक्रिया दिएका छन् । शुरुको विधेयकको मस्यौदामा निजी विद्यालय २० वर्षपछि गुठीमा लैजानुपर्ने व्यवस्था राखिएको थियो तर विधेयक आउँदा गुठी वा कम्पनीमा लैजानुपर्ने गरी स्वैच्छिक व्यवस्था राखिएको छ । यस्तै निजी स्कूलका शिक्षकहरूले सरकारी सेवासरह सेवा-सुविधा पाउनुपर्ने प्रावधान थियो, त्यसलाई उडाइएको छ । यसरी विधेयकका कतिपय बुँदा काँटछाट हुनुको पछाडि मन्त्रीको भूमिका मुख्य छ भन्छन् कर्मचारीहरू !

## श्रीमानलाई...

चलाख पाइएका छन् । प्रहरीले अहिले ज्वाइँलाई सरह माछा, मासुसहित भनेजस्तो खानेकुरा दिएर एक्लै थुनुवा कोठामा राखी उनको पृष्ठभूमि हेर्दैछ । उनीसँग प्रहरी र अदालतले सांकेतिक भाषाका दोभाषेमार्फत बयान लिइरहेको छ । उनीबाट यसअघि अरु २-३ जना मारिएको प्रारम्भिक सूचना प्रहरीलाई हात लागेको छ । उनी आफैं पनि अंग्रेजीमा लेखेर जवाफ दिन सक्छन् । उमेर २२ वर्ष, पढेको जम्मा १२ कक्षा, क्षमताचाहिँ एमए गरेजत्तिको !

उता, त्यत्रो हल्लिखल्लीका साथ मीटरव्याज पीडितलाई न्याय दिन कानुन बनाइयो । तर, त्यही कानुन कस्तो भयो भने, पीडकले पीडितलाई र पीडितले पीडकलाई पालैपालो दुःख दिने !

मानौं, एउटा मान्छे चेक बाउन्स मुद्दामा थुनियो । ऊ निश्चित दिनपछि धरौटीमा छुट्ने नै भयो । अनि, त्यसपछि जसले उसलाई थुनाएको हो, त्यसविरुद्ध अर्को जाहेरी दिने भयो, मीटर व्याजमा ! अर्थात्, हिजो बाउन्स चेकमा मुद्दा चलेको मान्छेले बदला लिन मीटर व्याजमा मुद्दा हालिदिने सिलसिला बढेपछि 'न्याय' का लागि जारी गरिएको कानुनले न्याय हैन, प्रतिशोधको श्रृंखला बढाएको छ । अहिले देशभरका प्रहरी कार्यालयमा मुद्दाको स्थिति हेर्दा आर्थिक अपराधअन्तर्गत बैंकिङ कारोबार र सहकारी ठगीका घटना बढी छन् ।

त्यस्तै, कल सेन्टरका नाममा हुने ठगीमा विदेशी नागरिक संलग्न हुँदै आएकोमा अब नेपाली नै सक्रिय हुन थालेका छन् । कीर्तिपुरमा एक २२ वर्षीय युवकले कल सेन्टर खोलेर ठगीधन्दा चलाएको पाइएपछि निजलाई समातिएको छ ।

## जर्नेल...

सुरक्षाकर्मीले मात्रै नपाउने । यो सरासर विभेद हो । रातो पासपोर्ट लिएर कोही स्वर्ग पुग्ने होइन । पाउने अधिकार त दिनुपऱ्यो नि ! सिपाही र विशिष्टलाई एउटै लेभलमा राख्ने हो भने विशिष्ट भनेर छुट्याइराख्नै परेन ।' सशस्त्रका एक जना विशिष्टले गुनासो पोखे ।

'र' को निम्तो मान्न १४ गते दिल्ली जान लागेका गुप्तचर प्रमुख हुतराज थापालाई पटकपटक यसबारे घच्घचाउँदा पनि उनले पहल गर्न चासो नदेखाएको एक जना विशिष्टको भनाइ छ । यता, परराष्ट्रका एक अधिकारीले भने सर्वपक्षीय छलफलपछि मात्र सुरक्षा निकायका विशिष्टहरूको पासपोर्ट कटौती गरिएको बताए । गृहबाटै रातो पासपोर्ट सुविधा कटौतीका लागि प्रस्ताव आएको एक जना अधिकारीको दाबी छ । उक्त नियमावलीका कारण झण्झट भएपछि गृह र रक्षा मन्त्रालयले पुरानै व्यवस्था मिलाउनलाई पत्राचार गरेको उनले जानकारी दिए । 'रक्षाबाट पत्र आएको धेरै भइसकेको छ । यता, गृहले पनि पत्र पठाएको छ । उनीहरूको पासपोर्ट सुविधा परराष्ट्र आफैंले काटेको होइन । उतैबाट प्रपोजल आएपछि कटौती गरिएको हो । प्रमुखबाहेक अन्यलाई किन रातो पासपोर्ट दिने भन्ने कुरा आयो । अहिले प्रहरीको आइजिपी र सेनाको चिफ अनि लेफ्टिनेन्ट जर्नेल २ जनाबाहेक कसैले रातो पासपोर्ट पाउँदैनन्', उनले भने ।

सचिव भनिने सबैले रातो पासपोर्ट पाइरहँदा एआइजी नै शाखा अधिकृतको हैसियतमा झरेपछि सिआइबी प्रमुख किरण बज्राचार्यले केही समयअगाडि अमेरिका जाने क्रममा परराष्ट्र पुगेर घोर आपत्ति जनाएको स्रोत बताउँछ ।